# विजया दशमीको महान चाडमा

## समस्त नेपाली प्रति

## सुख, शान्ति र समृद्धिका लागि

# हार्दिक शुभ-कामना छ

## मि. सु. प्रकाशमान सिंह

२०२८ साल अध्यक्ष

## जनकपुर अञ्चल समिति

विजया दशमीको शुभ-कामना सहित

## श्रद्धाञ्जलि

हे काव्यप्राण भानू ! जन-प्रिय रसिलो राष्ट्र-भाषा अँगाली,
छन्दोऽलङ्कारशाली रसमय मधुरो काव्यको जग् बसाली ।
लेखाई रासगीता सुर-नगर पुग्यौ ज्ञानको दीप बाली,
हाम्रो ल्यौ तुच्छ श्रद्धाञ्जलि यहि ऋणको व्याज संझेर खालि ॥

—प्रो० कृष्ण प्रसाद उपाध्याय


सम्पादक
रमेश "आर्य"

प्रवंध सम्पादक
राधेश्याम अर्याल

विशेषांक संयोजक सम्पादक मण्डल

प्रो० कृष्ण प्रसाद उपाध्याय
पं० तारा प्रसाद उपाध्याय
प्रो० रोहिणी बल्लभ शर्मा
प्रो० धीरेन्द्र
प्रो० राम प्रसाद भट्टराई

सहयोगी

से. अ. माधव प्र० उपाध्याय (कष्टम)
श्री लोकराम पाण्डे (प्र. अ.)
श्री जगदीश घिमिरे
श्री नूरनाथ आचार्य

प्रकाशक :-
जनकपुर कला परिषद् (नेपाल)

आवरण चित्र :-
श्री नूरनाथ आचार्य द्वारा

[ मूल्य रु. २।- ]

## चिन्हारी

भानुभक्त भनी प्रसिद्ध नरमा जस्को छ नाऊँ पनि
घर् तिन्को तनहूँ त वेसि चुँदि हो गाऊँ त रम्घा भनी

(भानु)

## असतो मा सद्गमय

हे भानुभक्त! अनुरक्त छ जाति सारा,
तिम्रा सुधा सरि मिठा पढि वाक्य धारा।
तिम्रा मिठा मधुर काव्य कला निमित्त,
आजन्म देश रहनेछ कृतार्थ चित्त॥

(धरणीधर कोइराला)

## प्रस्तुत,

नेपाली युवावर्गको भावनात्मक एकताको प्रतीक

# जनकपुर कला परिषद्

द्वारा

## सञ्चालित

- साँस्कृतिक कार्यक्रम
- साहित्यिक प्रकाशन

र

उत्साही युवकहरूद्वारा वेला-वेलामा जनकपुर कला-परिषद्‌ले स्थानीय युवा वर्गमा बौद्धिक र वैचारिक जागरण ल्याउने उद्देश्यले समय-समयमा वादविवाद, कविगोष्ठि, प्रवचन वा अन्य किसिमको गोष्ठी संचालन गर्न यस परिषद्‌ले निधो गरेको छ ।

यस्तो पवित्र संस्थालाई शारीरिक, मानसिक र आर्थिक सहयोग गर्नाको साथै यसको साहित्यिक प्रकाशन "सारङ्गी"लाई विज्ञापन दियेर पूर्ण सहयोग गर्न आह्वान गर्दछौं ।

---

'सारङ्गी' नेपालको प्रायः सबै ठाउँमा पुग्दछ न पुगेको ठाउँमा हामी पाठकहरूको सुझाउको कदर गर्दछौं ।

—सम्पादक

# जीवन चरित्रः—

## जन्म :—

नेपालको सानु पर्वत प्रदेशको पश्चिम भागमा सप्तगण्डकीद्वारा सुसारियेको तनहूँ जिल्ला स्थित रम्घा गाउँको आँगनमा संवत १८७१ को आषाढ २९ गते भानुको उदय थियो ।

## कुल :-

विद्या बुद्धि र सम्पन्नतामा प्रख्यात र मर्यादित ब्राह्मण कुल तथा परिवारमा श्री कृष्ण आचार्य थिये । उनका ६ भाई छोरामा जेष्ठ पुत्र धनञ्जयका भानुभक्त एक मात्र पुत्र हुन् । तदर्थ जेठो छोराबाट उत्पन्न जेठो नातो स्वभावतः बाजेको प्रियपात्र हुन्छन् र फेरी भानुभक्तका पिता धनञ्जय सरकारी जागीर खरदारी खाई बाहिरै बसेका थिये । त्यसबाट पनि भानुले आफ्ना बाजेको सोभ्को सम्बन्धबाट आफ्नो संरक्षण र पुनीत संस्कार पाउने सौभाग्य पायेका थिये ।

## शिक्षा तथा संस्कार :—

पैल्है ब्राह्मण परिवार स्वभावतः शिक्षित हुन्थे फेरी जे जति थाहा हुन सकेको छ त्यसबाट पनि विद्वान्हरूले भानुको कुल विद्वान् र प्रतिष्ठित हो भन्ने कुरा प्रष्ट्याई सक्नु भयेकोछ । पुराण भन्न सक्ने र चिना बनाउन सक्ने क्षमता हुनु त्यस समयको साधारण शिक्षा स्तर भनिन्थ्यो । उस माथि भानुमा जुन संस्कारको प्रभाव पर्‍यो त्यो बाजे श्री कृष्ण आचार्यको प्रत्यक्ष व्यवहारको फल मान्नु पर्दछ र भानुले आफ्नो वंशको परिचय दिदा यो पद्य बनाएका बाट ई ठूला पण्डितका संतान हुन् भन्ने कुरा स्पष्ट छ :—

"पाहाडको अति बेस देश् तनहूँमा श्रीकृष्ण ब्राह्मण् थिया ।
खुप् उच्चाकुल आर्यवंशि हुन गै सत्कर्ममा मन् दिया ॥
विद्यामा पनि जो धुरन्धर भई शिक्षा मलाई दिया ।
उन्को नाति म भानुभक्त भनि हूँ यो जानि चिन्ही लिया ॥"

तसर्थ भानुभक्तले प्रारम्भमा आफ्ना बाजे संगै व्याकरण र साहित्यमा शिक्षा पाएको थाहा हुन्छ र संस्कृत भाषामा लेखेका गद्य पद्यको अनुवाद गर्ने क्षमता पनि उनमा भै सकेको पाइन्छ। १२ वर्षको उमेरमा एक जना ज्योतिषीका घरमा उनले ज्योतिष विद्या अध्ययन गर्न थाल्रे। ब्राह्मणको संस्कार कै अनुरूप भानुज्रे रूद्री, शिव महिम्न स्तोत्र आदिको पठनादि पनि समाप्त गर्नुका साथै समकालीन लोक परम्परादिको "सिलोक" आदिको पनि राम्रो प्रभाव परेको यथार्थता यिनको कविताादिमा झल्किने मनःस्थितिबाट प्रमाणित हुन्छ।

## घटना क्रम तथा ज्ञानोदय :—

हुन ता विधिको विधान र घटना चक्रको खेल को जान्न सक्दछ र ? तापनि सबै विशिष्टजनका साथ एउटा यस्तो घटना घटेको पाइन्छ जस्ले गर्दा आत्मबोध भनौं या ज्ञानको मूल ढोका खोली दियेको देखिन्छ। त्यसै गरी २२ वर्षको उमेरमा भानुभक्तको जीवनमा पनि एउटा घटना बढ्यो कि एक दिन उनी वनमा एउटा रूखको छहारीमा बसेका थिए। त्यसै वखत यिनको एउटा घाँसी संग भेट भयेछ।

घाँसी सित वसी कुरो कन्थो गर्दा भानुज्रे के थाहा पाए भने त्यो घाँसीले आफ्नो अल्प कमाईबाट जीविका चलाई केही जगेरा गरेर त्यो पैसाले आफ्नो गाउँमा कुवाँ खनाई पछिको धर्म र नाउँ राख्ने यत्न र विचार गरेको रहेछ।

भानुभक्तको मनमा यस कुराले खुब प्रभाव पारे छ! उनि आफ्ना कुल, धन र ज्ञान सबैलाई तत्क्षण आफ्नो सामु विचार गर्न थालेछन् र बुझ्रेछन् कि है सबैज्रे परिपूर्ण भएको भएता पनि उनले 'न कुनै नाउँनै राख्न सकें र धर्म नै गर्न सकें" भनेर ? यस अन्तरात्मको भावले भानुभक्तको जीवनमा ठूलो भूईचालो ल्यायेझैं भयेछ र भन्ने कुरा, त्यसै भावनालाई आफ्नो लेखनी द्वारा प्रष्ट गरेको छ।

"भर् जन्म घाँस तिर मन् दिइ धन् कमायो
नाम् क्यै रहोस् पछि भनेर कुवा खनायो।

घाँसी दरिद्र घरको तर बुद्धि कस्तो
मो भानुभक्त धनि भैकन आज यस्तो ॥

( २ )

मेरा इनार न त सत्तल पाटि क्यै छन्
जो धन् र चीजहरू छन् घर भित्र नै छन् ।
यस् घाँसिले कसरि आज दिएछ अर्ती
धिक्कार हो मकन वस्नु न राखि कीर्ती ॥"

भनि दुई पद कविता लेखेको वाट थाहा पाइन्छ ।

## कृति :—

साधारण घाँसीवाट प्राप्त प्रेरणाले भानुभक्तले काव्य रचना गरी जन सेवा गर्ने निश्चय गरेको पाइन्छ । वि० सं० १८९८ मा नेपाली भाषामा रामायण वालकाण्ड पनि लेखे ।

यस्को ६।७ वर्ष पछि भानुभक्त जग्गा विषयका झगराले गर्दा पहिलो पटक काठमाडौं आउँदा त्यहा वालाज्यू र कान्तिपुरको सौन्दर्यको वर्णन देशभक्तिपूर्ण कवितामा गरेकाछन् जुन आज पनि प्रसिद्ध छन् ।

घटना क्रम र मुद्दाको सिलसिलामा काठमाडौं आई रहनु पर्दा स्वभावतः संगतमा हुनु र कसैको सहारा लिनु उचित छ र उता १२ वर्ष के उमेरमा बाजे परलोक भै सकेको बुझिन्छ । त्यस वेला देखिन १५।२० वर्षको अवस्थामा के भयो भन्ने कुरा प्रष्ट छैन र हुन सक्दछ—काठमाण्डौको प्रभाव वा बाबु र काकाहरूको जागीरको मान देखेर पनि होला, केही यकिन गर्न सकेको पाईदैन तर भानुभक्तले मुख्यत्यार जंगवहादुरका भाई कृष्णवहादुरको आश्रय लिई वि० सं० १९०६ तीर जागीर पाई मदेस तिर आये ।

दुइ वर्ष भर जागीर खाये । त्यस पछि खोसीयेर वही-पत्र वुझाउन न सक्दा १९०९ मा पाँच महिना जति थुनामा परे ।

यसै समयमा भानुभक्तले रामायणको अरू काण्ड समेत पुरा गरें तथापि धुनुवामा परिरहनु स्वभावतः कष्ट दायक छ । त्यस माथि पनि एउटा सत्यानुभूतिको झिल्को अन्तरात्मामा परिसकेको व्यक्तिले अन्यायमा अथवा वहीको रकमी ढाँचा-काँचा न वुझदा पनि भूल हुन गै थुनुवा वस्नु परेको होस तमर्थ कष्ट दायक जीवनको एउटा प्रत्यक्षपन वहाँले वनाउनु भयेको पद्यबाट थाहा हुन्छ,

"रोज् रोज् दर्शन पाउँछू चरणको ताप् छैन मनमा कछू
रात् भर् नाच् पनि हेर्छु खर्च न गरी ठूला चढ्न्मा म छू ।
लाम्खुट्टे उपियाँ उडूस रंगि छन् यिन्कै लहड्मा बसी
लाम्खुट्टेहरू गाउँछन् यि उपियाँ नाच्छन् म हेर्छु वसी ।

(१)

शरिर छ अति कच्चा अन्न जल्ले रह्याको
विनति कति गरूँ यो देहमा जो भयाको
वहुत फजिति पायाँ रोगले ग्रस्त पारी
शरिर हुन गयो ठिक् पूर्व झैं फेरि भारी ।"

धुनाबाट छुटेको अर्को वर्षनै रामायण समाप्त गरियो र नेपाली भाषा र साहित्यको या अमूल्य ग्रन्थ अन्दाजी ११ वर्षमा सकियो ।

त्यस पछि भानुभक्त आफ्नो एक मात्र पुत्र रमानाथको व्रतवन्ध गर्न तनहुँ फर्के र यसरी व्रतबन्ध आदि पर्दा आफ्ना आश्रयदाता र हित संग शुभेच्छा लिने चलन अैलै पनि छ र फेरी ब्राह्मण जति सम्पन्न भए पनि सम्पन्नशालीको कृपाभिलाषीनै हुनु पर्दथ्यो । त्यै सत्यताको आधारमा छोराको व्रतवन्धनमा जनरल कृष्णवहादुर राणालाई लेखेको विन्तिपत्र, रचनाकलाको माधुरीले लट्ठ पार्ने स्वभाव राखेको छ ।

"जागिर् छैन धनी म छैन घरको केवल् क्वदालो खनी
खान्थ्याँ दुःख गरेर चाकरि गर्‍याँ मान् पाउँला की भनी

एक् मन् चित्त लगाइ चाकरि गर्‍याँ खुसी भया छन् हरी
मान् माथि पनि भुक्तमान् थपि दिया कैल्है न खोस्न्या गरी ।

( १ )

चालिस् वर्ष भयाँ म पुत्र पनि एक् मात्रै छ आठ् वर्षको,
आयो काल् व्रतबन्धको गरुँ कसो वेला त हो हर्षको ।
क्याँरूँ नाथ म ता पर्‍याँ फजितिमा एक्लो यहाँ छू फगत्,
कुन् पाठ्ले व्रतबन्ध पार् गरूँ भनि देख्छू अँध्यारो जगत् ।

( २ )

गायत्री दिनु बाबुको छ अधिकार् भिक्षा दिनू माइको
वालख्ले पनि वेद् पढीकन सुसार् गर्नू गुरू गाइको,
यस्तो मुख्य वखत् छ यो अरू छ कुन् काम् पारलाई दिन्या
धेरै विन्ति कती गरूँ चरणमा एकै कुराले छिन्याँ ।

( ३ )

ख्वामित् आज हजुर्हरू पृथिविमा मालिक् छँदामा पनी
ब्राह्मणको व्रतबन्ध अड्कन तयार् देख्याँ र मालिक् भनी ।
जाहीरात गर्‍याँ प्रभू चरणमा जो मर्जि होला भनी,
कण्ठैसित् भनि मर्जि हुन्छ त भन्या क्यारूँ सहन्छू पनी ।।"

यसै एकै वर्षमा उनले प्रश्नोत्तरी तथा भक्तमाला जस्ता कविताहरू बनाये । भक्तमालाको १५ श्लोकको मात्र संस्कृत अनुवाद पाइयेको छ बाँकि ७ श्लोकको अनुवाद न भएको बुझिन्छ ।

यसै गरि एक जना सँधियार गिरिधारी भाटले खेतको सांध मिचिदिएकोले मुद्दाको तहमा एउटा ईजहार दिए त्यो इजहार गद्यमा लेखेको होला तर भानुभक्तले त्यसलाई पनि गद्यमा रचना गरेको पाइन्छ जो मार्मिक छ ;

"स्वामित् यस गिरिधारिले अति पिऱ्यो व्यर्थै गऱ्यो झेल् पनी
यस्का झेल उतार्नलाई सजिलो यो हो व्यहोरा भनी ॥
स्वामित्लाई चढाउनाकन यहाँ क्यै श्लोक कविता गऱ्याँ ।
मेरो श्लोक् सुनि वक्सियोस् त झगडा छिनिन्छ पाऊँ पऱ्याँ ॥"

मुद्दा न छिनिदा र तारिखको ताँदोमा पर्दाको भाव, आदि यसरी व्यक्त गरेको पाइन्छ,

"विन्ती डिट्ठा विचारीसित म कति गरूँ चुप् रहन्छन् न बोली ।
बोल्छन् ता ख्याल् गऱ्या भैं अनि पछि दिन दिन् भन्दछन् भोली-भोली
की ता सक्तीन भन्नु कि तब छिनि दिनू क्यान भन्छन् ई भोली ।
भोली भोली हुँदैमा सब घर वितिगो वक्सियोस् आज भोली ॥"

मुद्दादिको झंझटले भानुभक्तलाई काठमाडौ आई रहनु परेको कुरा स्पष्ट छ । यसै गरी एक चोटी काठमाडौबाट घर तनहुँ फर्कदा बाटामा आफ्ना भित्र तारापतिका घरमा वास वस्नु परेछ र त्यो रात सासु-बुहारीको झगडा भयेछ । त्यसै वखत रातमा नै ३३ श्लोकको बधू शिक्षा पद्यमा रचना गरे छन् ।

एक दिन आफ्नी स्वास्नीले उनका सासु हाँसी छन् यो देखेर भानुभक्तले पद्यमा भने छन्,

"हाँस्नू छैन कदापि नारीहरूले वेश्या हुना हाँस्तछन् ।
वेश्या तौ नहउन् तथापि घरको काम् ती सबै नास्तछन् ॥"

फेरी गजाधर सोती की घर बुढिको अलच्छिनपन बारेको रचना पनि उतिके मार्मिक र आत्मा छुने छ ?

भानुभक्त आशु कवि हुनाले उनका बातचितको पत्रादिको माध्यम नै पद्य भएको अरु अनेकन् रचनाबाट प्रष्ट हुन्छ ।

वि० सं० १९२५ तिर धर्मदत्त ग्वालीले रामगीताको पद्यानुवाद गरिदिन अनुरोध गर्नु भएको थियो। त्यस अनुसार काठमाडौं बाट पुनः फर्के पछि यो काम गर्ने अर्को विचार थियो तर बिचमै आफू बिरामी परी काठमाडौं जान न सकेको र फेरी अन्तिमावस्थाको बोध पनि भए झैं आफ्नो समयको सुख र पुत्र रमानाथको कलम लगाएर रामगीता तैयार पारी दिए।

**अन्त :—**

विक्रम संम्वत १९२६ मा रम्घा गाउँमानै थिनको देहान्त भयो! (बाबुराम आचार्यको अनुसार)

**व्यक्तित्व :—**

भानुको व्यक्तित्वलाई यसो नियालेर हेर्नै हो भने थिनको काव्यपक्षलाई मात्र न हेरी, उनको निजी जीवन र चरित्रलाई पनि हेरेमा निजको व्यक्तित्व कृतिको एक रूपता वर र पिपलको संयुक्त महत्व झै खुलस्त छ।

उनि एउटा खरो मिजासको भैकन, नम्रता र सत्यपन अर्को बुद्धि तत्वमा यसरी झलकेको पाइन्छ कि भानु मानु सबैका मामु यथार्थताका प्रबल प्रतीक थिये।

समाजको उत्थान, "भोलीभोली"को त्रिवेकहीनताको विरोध, सर्व कल्याणकारी प्रवृति, चरित्र निर्माणको व्यग्रता आदि उनको संस्कारको देन हो।

जसबाट भानुले आफ्नो जीवन निर्माण गरेर, ब्रह्माले प्रतिज्ञा गरे मुताबिक यो पृथ्वीमा पर्वतहरू खडा रहुन्जेल, नदीहरू बगुन्जेल समस्त संसारमा जीवित रहने मर्यादा पुरुष भगवान श्री रामको पुनीत कथा रामायणको माध्यम द्वारा समस्त देशवासीमा भगवत प्रेरणाका साथ भाषा र धर्मको यस्तो सरस प्रवाह बहाउनु भयो कि देशका कुना-काप्चामा "नेपाली" एउटा यस्तो फुल फुल्यो जस्को सुगन्धमा नेपाल गम्केको छ, जस्को मृदुलतामा "आर्य" परम्परा झल्केको छ, र जस्को लयमा नेपालीको प्राकृत बोलेको छ, भानुभक्त नेपालीको महान्आत्मा हुन्।

संकलन :-

**नूर नाथ आचार्य**

# भानुका कृतिहरू

(क) घाँसी (कविता)

(ख) रामायण

(ग) वालाजी र कान्तिपुरी (कविता

(घ) प्रश्नोत्तर

(ङ) भक्तमाला

(च) वधू शिक्षा

(छ) रामगीता आदि

## शाश्वत सत्य

सानैमा भानु मेरो सरल हृदयको भावको सिंघुलाई
निद्रामा घच्घच्याई हृदयतक यसको माथि सोसा उड़ाई ।
रूञ्चे वर्षा सिकायौ शुभ हरिपदको जो सुसैल्यौ विशेष
मेरो यो अश्रु विन्दु प्रति टलवल नै नाच्छ तिम्रो प्रकाश ॥"

(बालकृष्ण सम)

# ज्ञानोदयको प्रथम किरण :-

## घाँसी

भर् जन्म घाँस तिर मन् दिई धन् कमायो ।
नाम् क्यै रहोस् पछि भनेर कुवा खनायो ॥
घाँसी दरिद्र घरको तर बुद्धि कस्तो ।
मो भानुभक्त धनि भै कन आज यस्तो ॥१॥

मेरा इनार न त सत्तल पाटि क्यै छन् ।
जे धन् र चीजहरु छन् घर भित्र नै छन् ।
तेस् घाँसीले कसरि आज दिये छ अति
धिक्कार हो मकन बस्नु न राखि कीर्ति ॥२॥

ब्रह्माको प्रतिज्ञा :-

जैले सम्म यो पृथ्वीमा पर्वतहरू खडा रहने छन्, नदीहरू बग्ने छन् तैले सम्म समस्त संसारमा रामायणको कथा जीवित रहने छ ।

## अनि नेपालले पायेथ्यो :-

—एक स्वर

—एक भाषा

—पहिलो महा-काव्य—

## मर्यादा पुरुष श्री रामको अमर कथा

# "रामायण"

# रामायणका घत लाग्दा अंशहरू:—

## श्री बालकाण्ड

एक् दिन् नारद सत्यलोक् पुगि गया लोक्को गरूँ हित् भनी।
ब्रह्मा ताहिं थिया पऱ्या चरणमा खुशी गराया पनि ॥
क्या सोधूछौ तिमि सोध भन्छु म भनी मर्जी भयेथ्यो जसै।
ब्रह्माको करुणा बुझेर ऋषिले विन्ती गऱ्या यो तसै ॥

( १ )

हे ब्रह्मा ! जति हुन् शुभा-शुभ सबै सूनी रह्याँछू कछू ।
बाँकी छैन तथापि सुन्न अहिले इच्छा म यो गर्दछू ॥
आऊला जब यो कली वखतमा प्राणी दुराचार् भई ।
गर्न्या छन् सब पाप् अनेक् तरहका निचका मतीमा गई ॥

( २ )

साँचो बात गरैन कोहि अरू कै गर्नन् त निन्दा पनी ।
अर्काकै धन खानलाई अभिलाष् गर्नन् असल् हो भनी ॥
कोही जन् त परस्त्रिमा रत हुनन् कोहा त हिंसा महाँ ।
देहैलाई त आत्म जानि रहनन् नास्तिक् पशु झैं तहाँ ॥

( ३ )

कामका चाकर झैं भएर रहनन् स्त्रीलाई द्यौता सरी
मान्नन् पितृ र मातृलाइ बुझि खुप् शत्रु सरीका गरी ।

---

भानुभक्तको रामायण अध्यात्म रामायणको छोटकरी अनुवादको काव्यमा हुनु पर्ने लालित्य, सरलता र विचारको मौलिकता भानुभक्तको प्रसिद्ध काव्य रामायणमा र अरू फुटकर कवितामा समेत पाइन्छ !

—बाबुराम आचार्य

ब्राह्मण् भैकन वेद् वेचि रहनन् कोही पढ्न् ता पनी
धन् ठूलो छ पनी भन्या सहज धन् आर्जन् गरौंला भनी ॥

( ४ )

जाती धर्म रह्न्न क्षत्रिहरूमा जो छन् इ नीचाहरू
शूद्रादी त तपस्वि होइ रहनन् ब्राह्मण् सरीका बरू ।
स्त्री धेर् भ्रष्ट हुनन् पती र ससुराको द्रोह ठूलो गरी
यस्ता नष्ट कसोरि मुक्त त हुनन् संसार सागर् तरी ॥

( ५ )

यो चिन्ता मनमा भयो र अहिले सोधूँ उपाये भनी
आयाको छु दया—निधान! कसरी तर्नन् सहज् ई पनी
यस्तालाई उपाय तर्न सजिलो कुन् हो उ आज्ञा गरी
मेरो चित्त बुझाइ बक्सनु हवस् क्याले इ जान्छन् तरी ॥

( ६ )

# श्री अयोध्याकाण्ड

एकान्त स्थलमा सितापति थिया सीता हजुर्मा रही ।
हात्मा चामर ली प्रभू कन तहाँ हाँकृथिन् समीप्मा गई ॥
आकाशमार्ग गरी बहुत् खुसि हुँदै नारद्जि ताहीं गया ।
नारद्जी कन दण्डवत् गरि तहाँ रामजी बहुत् खुस् भया ॥

( १ )

भूको भार म दुष्ट मारि हरुँला जान्छू अयोध्या महाँ ।
भन्न्या येति वचन् गरी कन हजुर् पाल्नू भयेथ्यो यहाँ ॥

यस्तो हो तर गादि दीन दशरथ् राजाजिका मन् भयो ।
स्वामित्‌ले अब राज्यमा भुलि दिया भार् हुनु काम् ता रह्यो ॥

( ४ )

नारद्‌का इ वचन् सुनी खुसि भई उत्तर् प्रभूले पनी ।
जल्दी बक्सनु भो म राज्य न गरी भोली म जान्छू भनी ॥
स्वामित्‌का इ वचन् सुनेर बहुतै नारद्‌जि खूसी भया ।
तिन् फेरा प्रभुको प्रदक्षिणा गरी आकाशगतीले गया ॥

( ५ )

राम्‌लाई वनवास् भरत् कन रजाइँ देऊ भनी जिद् गरी ।
द्वी वर्‌ले यहि द्यौ दिंदैन त भन्या बाँच्नू त मुर्दा सरी ॥
भोली येति कुरा भयेन त भन्या मर्न्याछु विष् खाइ म ता ।
भन्न्या येति कुरा सुनी फिरि गिन्या राजा जमिन्‌मा यता ॥

( १६ )

गयो खान्या वेला मकन त मिल्यो राज्य वनको ।
भरत्‌ले राज् पाया यहिं वसि गरुन् राज्य जनको ॥
विदा बक्स्या जावस खुसि सित म जान्याछु वनमा ।
म चाँडै फिर्न्याछू विरह न हवस् कत्ति मनमा ॥

( २५ )

सुन्यौ भाइ ! संसार्‌मा शरिर अति कच्चा छ जनको ।
शरिर् कच्चा जानी न गर तिमि रिस् कत्ति मनको ॥
सबै भोग् चञ्चल् छन् विजुलि सरि एक् छिन् न रहन्या ।
बिचार् यस्तो राखी सहु तिमि बडो हुन्छ सहन्या ॥

( ३० )

क्रोधै हो यमराज सर्व जनको वैतर्नि भन्नू पनी ।
तृष्णा हो भनि यो बुझेर तिमिले कैल्है न बिसर्या पनी ॥

सन्तोष्लाइ बुझि कामधेनु सरिको सन्तोष मन्ले रहू ।
रिस् गर्नू बढिया त छैन वनमा जानू असल् हो सहू ।

( ३५ )

हे लोक् हो ! अति गर्दछौ तिमि त शोक् यो शोक ता छाडि द्यौ ।
साक्षात् विष्णु इ हुन् भनेर मनले श्रीरामलाइ जानि ल्यौ ॥
पृथ्वीको सब भार् हरेर रघुनाथ् फिर्छन् इ जान्छन् कहाँ ।
साँचा हुन् इ कुरा अवश्य तिमिले खेद् कीन मान्यौ यहाँ ॥

( ४४ )

धीरा भै रहनू विपत्ति सहनू कस्तै परुन् ता पनी ।
कैल्है मोह विषे न पर्नु जनले माया छ संसार् भनी ॥
यस्तै बात् सुनि रात् बित्यो गुहजिका राम्का नजिक्मा रही ।
गङ्गा तर्न हुकुम् भयो प्रभुजिको ताहाँ उज्यालो भई ॥

( ५८ )

अहो ! मेरा खातिर् वन वन सिताजी पति सँगै ।
कुशासन्मा सुत्छिन् न त यसरि सुत्थिन् अघि कतै ॥
अहो ! धिक्कार् मेरी जन्मजननी कैकयि भइन् ।
इनैले गर्दामा पति सँग सिताजी वन गइन् ॥

( ८४ )

स्वामिन् ! हजुर्को म त दास पो हूँ ।
यो राज्य गर्ना कन योग्य को हूँ ॥
यो गादि ता याहिं हजूरको हो ।
मैले त सेवा गरि बस्नु पो हो ॥

( ९४ )

# श्रीअरण्यकाण्ड

सीताराम् वनमा पुग्या वन थियो साह्रै खजित्को तहाँ ।
बाघ् भालू अरु दुष्ट राक्षसहरू डुल्छन् निरन्तर् जहाँ ॥
ताहीं पौंचि हुकुम् भयो प्रभुजिको भाई ! तयारी भई ।
सीताका म अगाडि हिंड्छु तिमिले हिंड्नू पछाडी रही ॥ ४ ॥

देख्या तेस् वनमा अनेक् पृथिविमा खप्पर् र सोध्या तहाँ ।
कस्का खप्पर हुन् अनेक् नजरले देख्छू मन्याका यहाँ ॥
श्री सीतापतिका वचन् सुनि तहाँ विन्ती ऋषीले गर्‍या ।
ई सिर् हुन् ऋषिका यहाँ छन परी धेरै ऋषीश्वर् मर्‍या ॥ १४ ॥

राक्षस्का छलले वहुत् ऋषि मर्‍या भन्न्या कुरा यो सुनी ।
ताहाँ सब् ऋषिलाइ राखि सबका सामूने प्रतिज्ञा पनी ॥
सब् राक्षस्हरुको म नष्ट गरुँला भन्न्या प्रभूले गर्‍या ।
खूसी मन् हुन गो र ताहिं ऋषि ता आनन्दमा सब् पर्‍यो ॥ १५ ॥

आठ् कोसमा असल पञ्चवटी भन्याको ।
आश्रम् असल् छ रमयणीय वहुत् बन्याको ॥
ताहीं बसेर कछु दिन् तिमिले बिताऊ ।
सब् साधु माथि करुणा तहिं गै चिताऊ ॥२१॥

नाम सब् कात्या प्रभुजिले जब नाम सूनी ।
ऐल्हे म भज्दछु पती भनि येति गूनी ॥
बिती गरी म कन पत्नि बनाइ लेऊ ।
कन्दर्पको कठिन ताप छुटाइ देऊ ॥३१॥

भार् हर्न बीज् प्रभुजिले तहिं रोप्न आँट्या ।
लक्ष्मणजिलाइ भनि नाक र कान् कटाया ॥
आज्ञा लि लक्ष्मणजिले पनि काटि दीया ।
भागी डराइ कन भाइ जहाँ त थीया ॥ ३५ ॥

माया भया बहिनि माथि र झट्ट उठ्यो ।
बिस्तार साध्न नजिकै पनि जल्दि छुट्यो ॥
हे बैन्हि ! कुन् पुरुष हो भन नाक काट्न्या ।
खूपै रहेछ सहजै पनि मर्न आँट्न्या ॥ ४४ ॥

यस्तो पऱ्यो म कन आज सहाय देऊ ।
सुन्दर् ठुलो मृगस्वरूप् तिमि आज लेऊ ॥
रामचन्द्रलाइ छलि दुर् तिमिले गराया ।
सीता जसै म हरुँला तब फर्कि आया ॥ ५४ ॥

यस्ता वचन् सुनि सिता कन हर्न आँटी ।
नाम् काम् तहाँ सब कह्यो रति भर् न ढाँटी ॥
बोल्यो अवाच्य पति मानि मलाइ लेऊ ।
रामचन्द्रलाइ तिमिले अब छाडि देऊ ॥ ८४ ॥

रावण् भन् बीर थीजो अति झपट गरी हातमा खड्ग लीयो ।
काट्यो दूवै पखेटा रिस सित र तहाँ भूमिमा पारि दियो ॥
बाधा पाई जटायू पृथिवितल गिऱ्या फेरि रथ्को तयारी ।
जल्दी पाऱ्यो र सीता लिइ कन पुगि गो दुष्ट तासिन्धु पारी ॥ ८६ ॥

फेर् उत्तर् प्रभुले दिया अनुचितै हो यो गऱ्यौ ता पनी ।
छोड्नू कत्ति थियेन दुर्वचनले स्त्री हो भनी ता पनी ॥
येती बात् गरि राम आश्रम बिषे जल्दी कदम् ली गया ।
देख्यानन् र सिताजिलाइ ; बहुतै शोक् गर्न लाग्दा भया ॥ ६५ ॥

विस्तार् सब् गुरु देखि सूनि गुरुका आज्ञा मनैमा लिई ।
कैल्हे देख्छु हजूरलाइ भनि खुप् तन् मन् हजुर्मा दिई ॥
पूजा नित्य हजूरको गरि यहाँ स्वामित् ! बस्याकी थियाँ ।
हे नाथ् ! आज दया भयो हजूरको प्रत्यक्ष देखी लियाँ ॥११३॥

क्याले आज बहुत् प्रसन्न हुनु भो कुन् कर्म मैले गऱ्याँ ।
योगीका मनले न भेटि सकिन्या मैले त दर्शन् गऱ्याँ ॥
यस्तो बिन्ति सुनी दया बहुत भो हेतू प्रभूले कह्या ।
उच्निच् स्त्री र पुरुष् बिचार्दिन म ता खुस् हुन्छु भक्ती भया ॥११४॥

# श्रीकिष्किन्धाकाण्ड

जस्तो निर्मल हुन्छ सन्तहरुको मन् सोहि माफीक जल् ।
निर्मल् देखि बहुत् प्रसन्न हुनु भो लाग्यो र साह्रै असल् ॥
थोडा जल् पनि पान् गरी सकल वन् हेर्थ्या जगन्नाथ् तहाँ ।
देख्या सुग्रिवले डराएर नजर् लाया प्रभू छन् जहाँ ॥ ३ ॥

सुग्रिव्को हनुमान्ले पनि तहाँ विस्तार बिन्ती गऱ्या ।
वोकूँ श्री रघुनाथलाइ भनि फेर् आफ्नू स्वरुप् झट् धऱ्या ॥
राम् लक्ष्मण् दुन बोकि जल्दि हनुमान् सुग्रीवका पासमा ।
पौंचाऊं रघुनाथलाइ भनि खुप् कुद्या ति आकाशमा ॥ ६ ॥

हे राम् ! रावणलाइ मारि सहजै सीताजिलाई यहाँ ।
हाजिर् हामि गराउला हजुरमा त्यो दुष्ट जाला कहाँ ॥
येती बिन्ति तहाँ ति सुग्रिवजिले रामका हजुर्मा गऱ्यो ।
बोल्या श्री हनुमानले पनि तहाँ अग्नी र साक्षी धऱ्या ॥ ११ ॥

साह्रै दुःखि भयेर् सुग्रिवजिले बिन्ती गर्याको सुनी ।
सुग्रिवका अब दुःख हर्दछु भनी अन्तःकरणले गुनी ॥
खातिर् श्री प्रभुले गर्या सुन सखे ! त्यो वालि मारी यहाँ ।
तिम्रो राज्य गराउँला अब उपर् जोर् चल्छ तेस्को कहाँ ॥ १६ ॥

भन्छन् श्री रघुनाथलाइ रघुनाथ ! तिम्रो विराम् क्या गर्याँ ।
धर्मैं छोडि लुकेर आज तिमिले मार्यौ म ऐल्हे मर्याँ ॥
यो क्या क्षत्रियधर्म लुकि लुकि विर् बाण छोड्छन् कहीं ।
क्षत्री भै कन धर्म छोडि लडन्या एक् आज देख्याँ यहीं ॥ ४८ ॥

हे ताराजि ! विचार् न राखि तिमिले शोकैं कती गर्दछ्यौ ।
यो मेरो पति हो भनेर न वुझी व्यर्थैं शरीरि हर्दछ्यौ ॥
जीवै हो पति भन्दछ्यौ पान भन्या मर्दैन जीव् ता कहीं ।
देहै हो पनि भन्दछ्यौ त किन शोक् गर्छ्यौं छ ऊ ता यहीं ॥ ६२ ॥

# श्रीसुन्दरकाण्ड

धन्यै भयाँ म अहिले प्रभुको स्मरण् भो ।
संसारको भय छ जो उ त आज दुर् भो ॥
जस्तो मिल्यो म कन सङ्ग र भक्ति ऐल्हे ।
यस्तै रहोस् यहि म पाउँ न बिर्सुँ कैल्हे ॥ २५ ॥

भोकी मैलि निन्याउरी न त कपाल् कोर्याकि सब् केश् उसै ।
लट्टा मात्र गर्याकि खालि भुमिमा रूँदै बस्याकी यसै ॥
राम् राम् राम् यति मात्र बोलि रहदी देख्या र साना भई ।
पात्का अन्तरमा लुक्या ति हनुमान् रूखका उपर्मा गई ॥ ३१ ॥

पाजी रावण ! बोल्ददछस् कति बहुत् दुर्वाच्य बक् बक् गरी ।
राघव् देखि डराइ छलन भनि एक् सन्न्यासिको रुप् धरी ॥
जस्तो यज्ञ विषे हवी कुकुरले हर्छन् उसै चालले ।
राम लक्ष्मण् न हुँदा हरिस् ताँ बुझिले मर्लास् यसै कालले ॥ ४० ॥

रावण् गोमय कुण्डमा कुल समेत् खुप् तेल मर्दन् गरी ।
बुड्थ्यो सब् मुड आफना उनि उसै मुड्को त माला धरी ॥
श्रीराम्का नजिकै विभीषण थिया भक्ती प्रभूको गरी ।
गर्थ्या खूप टहल् बहुत् खुसि हुँदै तन् मन् वचन् एक् गरी ॥ ४८ ॥

जो यो लोक विषे प्रपञ्च छ सबै जान्स्वप्न जस्तो भनी ।
सूतुनुज्याल् सपना छ सत्य उठि ता लाग्दैन साँचो पनी ॥
तस्तो ज्ञान् त भयो भन्या त्रिभुवनै एक् देख्छ आत्मा फगत् ।
अज्ञान् रुप् निंदमा पऱ्यो पनि भन्या देखिन्छ नाना जगत् ॥११३॥

आत्मा सत्य म हूँ भनेर बुझिले यस् देहलाई पनी ।
झूटो जान् पृथिवी र जलहरु मिली झुट्है बन्याको भनी ॥
तर्लास् यो मनमा लिइस् पनि भन्या तार्न्या उनै विष्णु छन् ।
जो हो विष्णु उ राम हुन् शरणा पर् रिस् उनू छ तेरा त मन् ॥११४॥

यस्तो मूर्खपना तेँ छोड् लियर जा सीता शरणमा ताँ पर् ।
खुस् हूनन् रघुनाथ् शरण् परि गया यो दुष्ट चाला न गर् ॥
रामको भक्ति गरैन ता कसरि यो संसार तर्ला उसै ।
पर्लाँ जन्मनु मर्नु यै फजितिमा छुट्तैन यो ताप् कसै ॥११५॥

# श्रीयुद्धकाण्ड

भन्छन् श्रीरघुनाथ अहोइ हनुमान्ले खुप् ठुलो काम् गऱ्या ।
एक्लै गै कन रावणादि विरको सेवी इनैले हऱ्या ॥
यस्तो व्वार समुद्र कूदि कन फेर् खाग् गर्नु लङ्का अनी ।
को सक्ला सब डर्दछन् इ जति छन् इन्द्रादि यौता पनी ॥ २ ॥

विर् हुन् ई हनुमान र कूदि कन गै कूदेर आया यहाँ ।
यो सागर् कसरी तरी म अहिले पौंचन्छु लङ्का महाँ ॥
गैह्रो व्वार समुद्र यो छ बिचमा जल्मा अनेक् जन्तु छन् ।
त्यो सागर् कसरी तरिन्छ भान खुप् आत्तिन्छ मेरो त मन् ॥ ४ ॥

त्रीकुट् पर्वतका उपर् छ सुनको पर् खाल छ चारौं तरफ् ।
थामै छन् मणिका जउन् घर महाँ देखिन्छ तिनको हरफ् ॥
एक् खाबा त समुद्र सो अरु नजिक् अर्को खन्याको पनी ।
पर् खाल्का नजिकै छ बेर् वरिपरी बैरी न आउन् भनी ॥ १० ॥

रामको नाम फगत् लिन्या कन पनी सब् दुःख ताप् टर्दछन् ।
आफैं श्रीरघुनाथलाइ पनि क्या सन्ताप् करौ पर्दछन् ॥
सच्चित् रुप् परिपूर्ण अद्वितिय एक् आत्मा स्वरूपी पनी ।
गर्छन् मानुष भेष लिजा पनि अनेक् सुखी र दुःखी बनी ॥ ११ ॥

राम् जो हुन् प्रभु हुन् अनन्त अधिनाथ् चौधै भुवन्का धनी ।
लक्ष्मी हुन् जगदम्बिका इ इनकी पत्नी सिताजी पनी ॥
सब् राक्षस्हरु नाश् गराउन यहाँ सीता तिमिले हऱ्यौ ।
साँचा हुन् इ कुरा अवश्य तिमिले आफ्नै वहुत् नाश् गऱ्यौ ॥ ३२ ॥

आफ्नू ज्ञाति बध्यो भन्या अरु सब ज्ञाती गिरोस् यो भनी ।
भन्छन निश्चय भन्दथ्या उहि छटा यस्ले जनायो पनी ॥
ऐल्हे मारि दिन्या थियाँ अरु भया भाई भयो क्या गरू ।
राक्षस्का कुलमा अधम् यहि भयो धिक्कार दिन्छू बरू ॥ ४१ ॥

विश्वास् कत्ति न मानि बक्सनु हवस् सब् दुष्ट पा हुन् इ ता ।
रावण्कै यदि भाइ हो त कित ढिल् मारौं न भन्छू म ता ॥
जैले पर्दछ छिद्र उस् बखतमा मार्नन् इ दागा गरी ।
मार्नालाइ हुकुम् हवस् सहजमा मारिन्छ येसै वरी ॥ ५० ॥

एकै बखत् पनि शरण् भनि जो मलाई ।
संझेर पर्दछ शरण् त म तेसलाई ॥
लिन्छू शरण् यदि उ शत्रु हवस् दयैले ।
मेरो व्रतै छ यहि छोड्छु कसोरि गैले ॥ ५३ ॥

जो रामचन्द्र तिर रात् दिन चित्त धर्छन् ।
राम् कै चरित्र पढि खुप् सित मग्न पर्छन् ॥
तिन्का ति कर्मवशका सब पाप छुट्छन् ।
वैकुण्ठका सफल सौख्य तिनै लुट्छन् ॥१६८॥

अज्ञान्को मति यो न लेउ तिमिले झूठो जगत् हो भनी ।
जानी श्रीरघुनाथमा चरणमा खुप् ध्यान् लगाऊ पनी ॥
प्रारब्धै बलवान् बुझेर सब यो राज्यादि गर्दै रहू ।
जो पर्छन् परि आउन्या सब कुरा नीका न नीका सहू ॥२७६॥

# श्रीउत्तरकाण्ड

यस्ती स्त्री पनि चोखि हो भनि यहाँ राजै त राखछन् भन्या ।
चोखी कुन् रहली यहाँ अब उपर् सम्पूर्ण वेश्यै बन्या ॥११४॥

हे भाई ! इ सिताजिलाइ अहिले त्याग् गर्नु मैले पऱ्यो ।
चोखी जानि लिंदा त दुर्यश बहुत् लोकले भलाई गऱ्यो ॥११५॥

फल् इच्छा गरि कर्म गर्छ यदि ता फेर् देह यस्तै लिई ।
त्यो फल् भोग् पनि गर्छ गर्छ अरु फेर् कर्मै बहुत् मन् दिई ॥
तेस्को फेर् पनि बन्छ देह करले येसै जगत्मा परी ।
यस्तै रित् सित घुम्छ त्यो भुवनमा अत्यन्त च ॰ै सरी ॥१२६॥

अज्ञानै छ घुमाउन्या सकलको शत्रु सरीको यहाँ ।
ज्ञानैले गरि नष्ट हुन्छ पनि सो लीनू यही मन् महाँ ॥
अज्ञान्को र इ कर्मको छ कति फेर् तस्मात् क्रियाले गरी ।
अज्ञान् नष्ट हुँदैन छैन अरु थोक् ऊपाय यै ज्ञान् सरी ॥१२७॥

अज्ञान् नष्ट हवस् न राग् न त छुटोस् अज्ञानका कर्मले ।
कर्मै गर्छ त घुम्छ यै जगतमा त्यै कर्मका धर्मले ॥
तस्मात् ज्ञान विचार गर्नु जनले ज्ञान्ले कती पार् भया ।
ज्ञान् छाडी कन कर्मले जनहरू संसार पार् को गया ॥१२८॥

विद्यालाइ सहाय कर्म छ ठुलो भन्छन् इ वेद्ले पनीं ।
तस्मात् कर्म अवश्य गर्नु जनले साहाय होला भनी ॥
कै येसो पनि भन्दछन् त ति भनुन् साहाय कोही रती ।
विद्यालाइ त चाहिंदैन बुझ यो विस्तार् बताऊँ कती ॥१२९॥

हुन्छन् कर्म त देह देहहरुमा[1] पूरा अभीमान् भई ।
विद्या हुन्छ त जो छ तेहि अभिमान् देहादिमाको गई ॥
बिद्याको र इ कर्मको त छ विरोध् साहाय हुन्थ्यो[2] कहाँ ।
बिद्यै एक् छ समर्थ मुक्ति दिनमा यै जान्नु[3] सब्ले यहाँ ॥१३०॥

रातका सँगमा रह्या स्फटिक ठिक् देखिन्छ रातै सरी ।
तस्तै आत्म पनी उपाधि सँग भै हुन्छन् उपाधी सरी ॥
आत्मामा उपाधि केहि न फटिक्मा क्यै छ रातो कतै ।
झुट्टै मात्र छ त्यो झलक् यहि विचार् खुप् राख्नु जत्ता ततै ॥१३६॥

जाग्रत् स्वप्न सुषुप्ति बृत्ति तिन छन् यस् बुद्धिका ई पनी ।
झट्टै देखि लिइन्छ नित्य सुखरुप् यस् ब्राह्मरुप्मा भनी ॥
जानी बृत्तिनिरोध् गरेर जनले यो आत्म जानी लिनू ।
आत्मा भीत्र उपाधिलाइ त झुटा जानेर छाडी दिनू ॥१३७॥

यस् जिव्ले बिहकै विचार न गरी मन्त्री अहङ्कार् लिंदा ।
मन्त्रीले जति आफुमा गुण थिया जिव्मा मिलाई दिंदा ॥
मन्त्रीका वशमा परेर यहि जिव् मै हूँ अहङ्कार् भनी ।
लाग्यो भन्न भन्या गन्यो[2] विषयमा बाँधिन्छ यो जिव् पनी ॥१६६॥

शम्भूले पार्वती थ्यैं खुसि भइ बहुतै प्रेमपूर्भक् कथ्याको ।
संसार् पार् तर्नलाई सब कन सजिलो साँघु झैं भै रह्याको ॥
जानी यस्लाइ जो ता जनहरु बहुतै प्रेमले पाठ गर्छन् ।
संसार्का सौख्य सब् भोग् गरि कन दुनियाँ सब् सहज्
पार तर्छन् ॥२७५॥

सबै भन्दा प्राचीन वि० सं० १०७६ को ६२८० लिखित रामायणको प्रति वीरलाई प्रेरीमा सुरक्षित छ ।

(बाबूराम)

—देश प्रेमको एक विशेष भेंट

— शृङ्गार रसको माधुरीमा,

# बालाज्यू वर्णन

यति दिन पछि मैले आज बालाजि देख्याँ ।
पृथिवि तल भरीमा स्वर्ग हो जानि लेख्याँ ॥
वरिपरि लहराका भूलि बस्न्या चरा छन् ।
मधुर वचन बोली मन् लिंदा क्या सुरा छन् ॥

याहाँ बसेर कविता यदि गर्न पाऊँ
यस् देखि सोख अरू थोक म के चिताऊँ
यस् माथि भन् असल सुन्दरि एक् नचाऊँ
खैचेर इन्द्र कन स्वर्ग यहीं बनाऊँ

र —:—

## कान्तिपुरी

चपला अबलाहरू एक सुरमा ।
शुनकेसरीको फुलली सिरमा ॥
हिंडन्या सखि ली कन ओरिपारी ।
अवरावटी कान्तिपुरी नगरी ॥

यतिछन् भनि गर्नु कहाँ धनि ञा ।
खुशिछन् मनमा बहुतै दुनिञा ॥

जनकी यसरी सुखकी सगरी ।
अलकापुरी कान्तिपुरी नगरी ॥
कहीं भोट र लन्डन; चीन सरी ।
कहीमाल भरि गल्लिछ डिल्लिसरी ॥

लखनौं पटना मदरास सरी ।
अलकापुरी कान्तिपुरी नगरी ॥

तरवार कटार खुडा खुकुरी ।
पिस्तोल र वन्दूक सम्म भिरी ॥
अति शूर र वीर भरी नगरी ।
छ त कुन सरि कान्तिपुरी नगरी ॥

रिस राग कपट छल छैन जहाँ ।
नव धर्म कती छ कती छ यहा ॥
पशुका पति छन् रखवारि गरी ।
शिवप्रीपुरी कान्तिपुरी नगरी ॥

• •

यिनको रामायण काव्यका लक्षणले भरिरेको हुनाले हाम्रा भाषाका आदिकवि भनेर यिनलाई नै कान्छी औंलामा गन्न सकिन्छ ।

—वावुराम अचार्य

भानुभक्तले रामायणलाई कथा काव्य मात्र बनाए, चरित काव्य बनाउन सकेनन् ।

—ईश्वर बराल

# वधूशिक्षा

## प्रस्तावना

एक् थोक भन्छु नमान्नु दुःख मनमा हे मित्र तारापति ।
तिम्रा ई जति छन् जहानहरू ता जुम्न्या रह्याछन् अति ॥
सून्या दन्तबझान आज घरको कर्कर् गन्याको जसै ।
भर्रात् जाग्रत भै भयो मकन ता लागेन आँखा कसै ॥१॥

धन् इज्जत् घरबार देख्छु बढिया छैनन् कुनै चिज् कमी ।
बूहारी यदि कर्कशा हुन गया क्या घर् गरौला तिमी ॥
साह्रै झोंक उठ्यो मलाई र वधू शिक्षा बनायाँ पनी ।
यस्ले पत्नि, बुहार, छोरिहरूको तालिम् गरौला भनी ॥

हुन त म अतिथा हूँ यस् बिनुँ क्या छ खाँचो ।
तर पति म त भन्छू मित्र हौ जानि साँचो ॥
घर चतुरत्नि गर्छन् बुद्धिमान्ले अगाडी ।
बखत चुकि दिंदामा हुन्छ काहाँ पछाडी ॥

## उपदेश

प्रातः कालमहाँ उठेर पहिले ध्यान् ईश्वरैको गरुन् ।
सो ईश्वर् पति हुन् भनेर पछि त्यो भक्ती पतीमा धरुन् ॥
भक्तीले पति इश्वरै भनि बुझुन् पाऊ-तलैमा परुन् ।
पूजा हो पतिको भनेर घरका काममा अगाडी सरुन् ॥१॥

झट्पट् स्नान गरेर शुद्ध जलले सब् देह निर्मल् गरी ।
जस्तो पुग्दछ सोहि माफिक असल् धोती कटीमा धरी ॥
सासूका चरणारविन्दयुगमा पूजेर पाऊ परुन् ।
मैले काम गरुं क्या अराउँनु हवस् यो ताँहि बिन्ती गरुन् ॥२॥

मान्ने छन् घरका सबै जति जना तिन्लाई ढोग् भेट् गरी ।
चाकर्लाई अह्राउनू खुसि हुदै मीठा वचन्ले गरीं ॥
माटो पानि खराउ औटन रुमाल् धोती दतीउन् धरी ।
स्नान् गर्न्या अखडा जहाँ छ तहि गै राखून् तयारी गरी ॥३॥

पूजाको सरजाम् गरुन् पति पुजा गर्छन् प्रभुको भनी ।
पूजामा खतडा कदापि नपरोस् कौनै कुराले पनी ॥
कस्तै अल्मलमा रहोस् घरमहाँ आया जगाया अलक् ।
जोगी जङ्गमले भन्या मुठि दिनू ढीलो न गर्नु पलक् ॥४॥

घर् सब् झारि बढारि नित्य त्यसले लिप्तै र पोत्तै रहोस् ।
चाकर् सब थलिया गया कहि भन्या आफैं तयारी रहोस् ॥
स्वामीका चरणारविन्दयुगको जल् भक्तिले पान् गरुन् ।
निर्मल् देह गराउनाकन उ जल् केही शरीर्मा छरुन् ॥५॥

जो इच्छा पतिको छ सो बुझि उसै माफिक् सबै काम गरुन् ।
जुन् स्थान् हो चिजको उहीं लगि उचिज् राख्न्या
स्वभाव पो धरुन् ॥
स्त्रीको खालि निधार् कदापि नरहोस् खाली निधार् भै जति
गर्छन् कर्म फलै हुँदैन तिनका टीको लगाया जती ॥६॥

तस्मात् नित्य टिका लगाइ पहिले धन्धा पछाडी गरुन् ।
पूजाको सरजाम् तयार् गरिसकी भान्छा बिषे मन् धरुन् ॥
भन्छाको सरजाम चाकर गरुन् भाँडा सफाई गरी ।
खान्या चीज भँडारमा पसि झिकुन् आफैं अगाडी सरी ॥७॥

रोगी बालक बृद्ध कोहि घरमा हुन्छन् त तिनको पनी ।
घत् जानीकन तम्तयार् चिज गरुन् खान्याछ यस्तो भनी ॥
यस्ता रीत् सित चीज् बनाइ बढिया सासू-ससूरा-पति ।
लाई खवाइ सकेर फेरि घरका खवाउन जहान् छन् जति ॥८॥

खवाई प्याइ सकेर सर्व परिवार् ले खाइ सक्छन् जसै ।
चूल्हा चोकी लिपाई जल्दी ति जुठा भाँडा मझाउन् तसै ॥
जो चीज् वस्तु भँडार देखि अघि जो झीकेर ल्याई थिइन् ।
सो सम्झेर तुरुन्त सोहि थलमा ती वस्तु राखी दिउन् ॥९॥

अलसी दूर गरेर नारिहरूले थान्को र मान्को गरी ।
काम्काम्मा परिवार लायर विचार् गर्दै रहुन् दिन् भरी ॥
धागा बत्ति समेत काति टपरा दूना बोहोता पनी ।
सिन्का साफ चिरेर राखनु अनी चाहिन्छ काम्मा भनी ॥१०॥

पूजा व्रतादिहरूका जति तीथि पर्छन् ।
सम्झेर गर्नु नभुलीकन पाप हर्छन् ॥
ठूलो व्रतौ त पनि सेवन गर्नलाई ।
क्यैं छैन फेरि अरू निश्चय नारिलाई ॥११॥

रोगी बालक बृद्ध सासु ससुरा जेठाज्यू देवर् पति ।
फूपू सासु आमाज्यु नन्द जति छन् खान्छन् इ खाजा जति ॥
सब्को हित् घत जानि नित्य दिनमा खाजा बनाई दिउन् ।
यस् रीत्ले अति खुश् बनाइ परिवार् सब्लाइ हात्मा लिउन् ॥१२

सौताको रिस गर्नु पाप छ बहुत् एकै दुवैका पति ।
मर्दामा पनि जानु पर्छ जसले मीलेर सङ्गै सति ॥
यस्तो जानि नमानि केहि मनमा मीलुन् बहुतै गरी ।
टाल्टुल् गर्नु फुट्यो टुट्यो घर भन्या सिप्लाई जाहेर् गरी ॥१३॥

अर्काका घरमा नजानु कहिल्यै आफ्ना घरैमा बसी ।
जे हुनू सब चीज् जती छ घरमा कुना र कानी पसी ॥
पर्छन् श्राद्ध दशैं तिहार अरु चाड् चाहिन्छ तिन्मा जती ।
ता चीज् सम्झि अगाडि संग्रह गरोस् यस्मा नचूकोस् रती ॥१४॥

मान्न्या जन् कन मान्नु जान्नु घरको ठग्को ठगाजी पनी ।
सब् सासूसित भन्न जानु उ गरुन् यस्को सजाजी भनी ॥
यस्ता रीत् सित सब् गरेर वशमा राखोस् सबैमा दया ।
तिन्को याद तुरन्त गर्नु जन जो भोका र नाङ्गा भया ॥१५॥

पाहूना जति आउँछन् घरमहाँ दर्जा छ तिन्को जति ।
सो जानेर उसै बमोजिम गरोस् मर्य्याद न चूकोस् रति ॥
पाउन् पापि कठोर चोरहरूले सोही बमोजिम् जवाफ् ।
राखोस् इष्ट कुटुम्ब मित्रहरूमा अमृत् सरीको रवाफ् ॥१६॥

साँचो बोल्नु नबोल्नु बात कहिल्यै झूटो भन्याको रति ।
आखिर् मर्नु छ पाउनू छ उांत फल् जाहाँ गन्याका जति ॥
यस्तो ज्ञान् मनमा लिईकन रहुन् सासू ससूरा पति ।
जे भन्छन् उहि गर्नु छैन अरु ता संसार तर्न्या गति ॥१७॥

भन्छन् शास्त्र पति र सासु ससूरा जेठाज्यु मान्नु भनी ।
भन्छन् ता पनि जो पती छ उसरी हुँदैन कोही पनी ॥
दृष्टान्तै पनि मिल्छ सासु ससुरा जेठाज्यु बित्ता सति ।
को जान्छन् पति पो बित्या पनि भन्या जानू छ संगै सति ॥१८॥

हाँस्नू छैन कदापि नारिहरूले बेश्या हुन्या हाँस्त छन् ।
बेश्या लौ नहउन् तथापि घरको काम् तो सबै नास्तछन् ॥
एक्लै हाँस्न हुँदैन कोहि न भइ आर्को संगी भो जसै ।
हाँस्तैमा दिन जान्छ एहि रितले सब् काम बितछन् तसै ॥१६॥

मानिस्को त बताउं क्या अब विचार् पक्षी पशूको पनी ।
पाल्याको छ भन्या तुरन्त बुझ्नू क्या आज खायो भनी ॥
जस्सै भो कसिंगर् बढानुं घर भर् कहीं नराखोस् रती ।
स्त्रीले जान्नु विचार राखि मनमा यस्तो बताउँ कती ॥२०॥

खान्या चीज् जति छन् सबै नजरले हेरेर ढाकछोप् गरुन् ।
जो चीज् हुन्छ सुकाउँन्या तिनकनै ल्याएर घाम्मा धरुन ॥
खान्या चीज कुहेर फाल्नु नपरोस् दीनू कि खानू वरु ।
एती जान्नु अवश्य घेर् अब बखान् कुन् कुन् कुराको गरुँ ॥२१

खान्या चीज नहेरि केहि नकुहुन सब् पैन्हन्या चीज् पनी ।
सप्पै याद रहोस् सदा मनमहाँ यो चीज् छ जाहाँ भनी ॥
चीज् ता छन् घरमा तथापि मनमा छैनन् त भै क्या भयो ।
आखिर् चीज् घरमा भई बखतको काम् सब् विती गै गयो ॥२२॥

जो चीज्छन् घरमा हिरा तल पिन्धा सब् चीज् मनैमा रहुन ।
जो खोज्छन् पतिले उ चीज् उहि बखत् ल्याएर चाँडो दिउन् ॥
खोज्दामा छन ता थियो तर कता राखयाँ हरायो भनी ।
भन्नू यो पति थ्यै पर्‍यो पनि भन्या मानोस् मरेभैं अनी ॥२३॥

पूजाको सरजाम जत्ति जति थोक् चाहिन्छ सो सब् गरी ।
साँझमा बत्ति जलाउँनू अनि ठुला पात्रस् विषे तेल् धरी ॥
खान्या चीज बनाइ खान दिनु जो खान्छन् परीवारले ।
जुन् चीज राख्नु भँडार पर्छ नभुली सब् राख्नु संभारले ॥२४॥

दिन दिन घरमा जो पाहुना वस्न आया ।
तिनकन नखुवाई आफुले क्यै न खाया ॥
गृहिणि भइ रह्याको यो ठुलो धर्म जान्नु ।
विहक सकि दियाको अन्न भन्न्या न ठान्नु ॥२५॥

कामका खातिर जत्ति चीज घरका दिन्मा झिक्याका थिया ।
रात्रीमा त उ काम् हुँदैन सब चीज् थन्क्याई राखी दिया ॥
सम्झी कत्ति न मानि अलिस सब चीज् थन्क्याई ताल्चा पनी ।
लाउन् चोर चकार डाँकुहरूले देख्नै न पाउन् भनी ॥२६॥

छिनि सकि सब धन्धा सासुको पाउ मिच्दी ।
उंधिकन बिखवर् भै पाउ मिच्दै त ढल्दी ॥
टहल गरि टहलले सासुलाई रिझाई ।
पतिसित तब जाओस् स्त्री टहल् गर्नलाई ॥२७॥

प्राण्का नाथ् पतिका अगाडि गइजो फर्माउँछन् सो गरोस् ।
भन्छन् ल्यान तमाखु खान्छु भनि ता चाँडै तमाखू भरोस् ॥
किस्मिस् दाख बदाम मिस्रि नखिल् जो चीज् छ सो सो दिई ।
पाऊ मिच्न तयार भै अघि सरोस् तेल्को कटौरा लिई ॥२८॥

आज्ञा माफिक अङ्ग पाउहरुमा मर्दन् बहुतै गरी ।
पाऊमा शिर राखि सब तहिं भनोस् जो काम् गरी दिन भरी ॥
यस्तो भो यसरी गर्‍याँ यति गर्‍याँ गर्न्या छु यो यो पनी ।
भन्न्या काम कुरो भनोस् पति पनी ई बात सूनुन् भनी ॥२९॥

जति गरि दिनमा काम् सो सबै बिन्ती गर्दी ।
मधुर बचन बोल्दी स्वामिको चित्त हर्दी ॥
पतिकन यस रीतले बातले खुश् बनाओस् ।
जब त पति निधाउन् काखमा त्यो निधाओस् ॥३०॥

यति सब वधुशिक्षाका सिलोक् जो बनाआँ ।
पढिलिनु सबले यो नारिको हित् जनाआँ ।।
यहि रितसित जो स्त्री नित्य सब् काम गर्छन् ।
उभयकुल संगै ली ती सहज् पार तर्छन् ।।३१।।

स्त्रीको धर्म पती मती पनि पती मर्न्या वखत्को गति ।
बाचुन्जेल् सुख भोग् पनी बुझि लिँदाको दिन्छ तेस्ले जति ।।
स्त्रीका धर्म पती जती त अरुथोक् देख्दैन मन्ले रति ।
यस् लोक्मा परलोकमा सुख दित्या सो हेर जान्छन् सति । ३२।।

स्त्रीको धर्म पतिव्रता अति ठूलो जो गर्दछन् भक्तिले ।
आफ्ना कुल् सब तारि पितृहरुको कुल् तार्दछन् शक्तिले ।।
स्त्रीको जन्म भयो भन्या त पतिको सेवा छ साह्रै ठुली ।
सो सेवा त गरी अनेक् अरु गरोस् साँचो कुरामा भुली ।।३३।।

"जस्तै चुम्बकका नजिक् परिगया नाच्छन् इ लोहा पनि ।
तस्तै जस् कन पाइ नाच्तछ जगत् नाना प्रकारको वनी ।।
यस्तो तत्व न जानि मानिस सरी रामलाइ जो गर्दछन् ।
संसार्का इ अनन्त ताप्हरू तिनैलाई सदा पर्दछन् ।।"

—रामायण

"यस्तै हो सुन कर्मका वश हुँदा वस्तैन एक् ठाम् रही ।
कस्तै कोहि हवस् अवश्य करले जानू छ जहाँ गई ।।
कर्मैको फल भोग गर्छ दुनियाँ यै चित्तमा लेउ भई !
... ... ... ... ... .."

—रामायण

# स्वर-सङ्गमः–

द्वै-मासिक पत्रिकाको हकमा पढी बेसै लाग्यो। तर आर्ट पेपर कागजमा छापिएको रङ्गीन फोटो समेतको अनेकौं मासिक-साप्ताहिक प्रचलित छन् ता पनि आफ्नू देशको द्वै-मासिक सान तिनु लेख तथा कविता भएको भए पनि मलाई त राम्रै लाग्यो। दिन पर दिन उन्नति पथमा अग्रसर हुँदै जावस् भन्ने कामना गरेको छु।

—सुन्दरप्रसाद मानन्धर
राजविराज-५
श्रावण १८,०२८

जनकपुर अञ्चलको जनकपुरधामबाट यता प्रकाशनमा आइराखेका साहित्यिक पत्रिकाहरूमा सारङ्गीको स्थान पनि विशेष रूपमा रहेको सत्य टडकारो छ। सारङ्गीको पहिलो, दोश्रो र तेस्रो अंकल ई हेर्दा, सारङ्गीले आफ्नो विशेषता गाढने झनक देखाएको कुरा निर्विवाद छ।......

आज स्पष्ट निर्भीक र जन पक्षीय दृष्टिकोणको आवश्यकता छ, हाम्रा साहित्यकारले विशेष रुपमा ध्यान दिनु पर्दछ। सारङ्गीका सम्पादकहरुले यता-तिर ध्यान दिन सक्नु पर्दछ 'सुझाव छ। जिल्लाबाट निक्लिएको भएर पनि यसले देखाएको नियमितता, यसका सम्पादकहरूमा देखापरेको जाँगर र सम्पादनको कदर गर्नै पर्दछ।

—टी. आर. विश्वकर्मा
मातृभूमि साप्ताहिक
जेष्ठ ११, ०२८

जनकपुरबाट प्रकाशित भएको 'सारङ्गी' [अंक-२] भित्र सोह्रवटा तार संग्रहित छन्। स्तरको ख्याल गर्नु भन्दा पनि राजधानी भन्दा बाहिरका साहित्यिकहरूको प्रयासलाई उत्तम मानिनु उचित ठाने प्रयास बेसै छ।......

राजधानी भन्दा बाहिरका जिल्लाहरूको कठिनतम मुद्रण र अन्य समस्याहरूको वावजुद 'सारंङ्गी' प्रकाशनलाई प्रशंसनीय कार्य भन्नु पर्दछ। यस्तै-यस्तै प्रयास अन्यत्र पनि हुन सके निकै बेस हुनेछ।......

—समीक्षा, २४ वैशाख ०२८

Really, I found the magazine very interesting

D. Basnet
कृष्णनगर, कपिलवस्तु (लुम्बिनी) ०२८।४।२८

त्यै नै आफ्ना जीवनको साफल्यरूप समाजका निमित्त ठूलो सामयिक सामाजिक सेवा हुने थियो ।

भानु घोरिएर संकन्न समाजलाइ जोड़ने बलियो पार्ने माथि उठाउने केहीछ भने परम्परागत प्राकृतिक शास्त्रीय आधार समाजगत सँस्कृति नै महान् साधन हुन्छ भन्ने कुरा स्वतः सिद्ध छ । आफ्ना नेपाली समाजका व्यवहारमा आयेका सँस्कृति अर्थात् भेष-भूषा भाषा भोजन धर्म इतिहास कला आदिको असाधारण प्रचार प्रसारले नै समाजमा एकता र राष्ट्रियताको अभिवृद्धिका साथै उसलाई सम्वृद्धिशाली बनाइन्छ एवं विश्व राष्ट्र मञ्चमा आफ्नो अलग राष्ट्रको स्वतन्त्र अस्तित्वको पूर्ण प्रमाणका साथ परिचय पनि दिन सकिन्छ सँस्कृति न भएको या दवेको देश पृथक् रहने सक्तैन । कथंचित रह्यो भने मौकामा प्रमाण रहित भै विश्रृङखलित समाजे सहित विलीन हुन्छ । भानुले समाजमा यस्को अत्यन्ताभाव सम्झी प्रथम परम कर्त्तव्य यसको प्रसार गर्नु नै ठाने ।

अनि भानुको कलंतिखारियो सामाजिक हितका भावनाले प्रेरित भै "एक दिन् नारद सत्यलोक पुगि गया लोकको गरूँ हित् भनी' भन्दै भावुक कवि हृदय भानुको सामाजिक सेवा भावना जागेको वेला थियो मर्यादा पुरुषोत्तम रामको पवित्र चरित्रलाई दर्शाउन चाहने कविले सँस्कृत न बुझ्ने टुक्रिएको नेपाली समाजलाई एक पारी कर्मयोगी बनाउन सीता-औ रामका पावन आदर्शलाई बोध गराउन खोजे । २७ वर्षको तन्नेरि उमेरमा बालकाण्डको तर्जुमा गरी "राम् हुन् ब्रह्म इनैकि शक्ति वलिई माया भन्याकी-महूँ भन्ने आदि उपदेशात्मक कविता-वलिले प्रकृति र पुरुषतत्त्व द्वारा नाटकीय संसाररूप मञ्चमा अभ्युत्थान मधर्मस्य त दात्मानं सृजाम्यहम्, वाक्य पालन गरी लोक-मर्यादाको प्रबल पुरुषार्थमनुष्यले रक्षा गर्न सक्तछ भन्ने प्रेरणा प्रदान गर्नु भया ।

३५ वर्षको उमेरमा गिरीधारी भाँट सङ्गको मुद्दाको वहानाले चिर आकाँक्षित स्वदेश राजधानी दर्शनको उत्कण्ठा-पूर्ण गर्ने कविका नयनले वालाज्यूको मनोहर दृश्यावलोकन गरेर कविबाट यति दिन पछि मैले आज वालाजी देख्याँ पृथिवि तल भरीमा स्वर्ग हो जानि लेख्याँ कान्तिपुर नगरको शोभा पुस्तकमा मात्र देखेका र कल्पनाले मात्र गुनेका कवि-नेत्रले प्रत्यक्षमा देखी "अमरावती कान्ति-पुरी नगरी." भन्ने पद लेखी स्वदेशलाइ

स्वर्गको तुलनामा राखी अन्यान्य देश भन्दा निज मातृभूलाई उच्चतम वनाउन न हिचकिचाउने कविले जननी जन्मभूमिश्च स्वर्गादपि गरीयसीको पाठ समाजलाइ पढायेका छन ।

कविले कुमारी चोकको खोरमा थुनिदा ज्ञानेन्द्रियलाइ वशमा राखी कर्मेन्द्रिय द्वारा फलमा असक्त भै काम गर्ने उत्तम पुरुष हुन्छ भन्ने उपनिषद्को वाक्य चरितार्थ गरेको र कर्म भोगले नै क्षय हुन्छ, अन्यथा हुँदैन भन्ने वाक्योपदेश श्री रामको चरित्रको "गयो खान्या वेला मकन त मिल्यो राज्य वनको" आदि अयोध्या काण्डका पद्यावलीले जनाई, "यो गादि ता याँहि हजूरको हो, मैले त सेवा गरि वस्नु पो हो" आदि पदहरूले भ्रातृत्त्व प्रेम जनाइयेको छ ।

त्यस्तै किष्किन्धा काण्डको पति विरहिणी शोकातुरा तारालाइ, "जीव हो, पति भन्दछ्यौ पनि भन्या मर्दैन जीव् ता कही देहैहो पति भन्दछ्यो त किन शोक् गर्छ्यौ छ ऊ ता यही" भन्ने सरलभाषा पद्यावलीले शरीरलाइ तुच्छ गराई आत्माको अमरत्त्व सावित गरी समाजलाइ नअल मानिई सरासर सोत्साह आत्मालाइ अमरत्त्व बोध गराउन परमकर्त्तव्य तर्फ लाग्नेसङ्केत गरिएको छ ।

सुन्दर काण्डमा वियोगिनी सीताको चरित्र-चित्रण गरी "भोकी मैलि निन्याउरी नत कपाल्कोरेकी सब् केश् उसै लट्टा मात्र पऱ्याकि खालि भूमिमा रुँदै वस्याकी उसै, राम् राम् राम् यति मात्र वोलि रहँदी देख्या र साना भई पात्का अन्तरमा लुक्या ति हनुमान् रुख्का उपर्मा गई" आदि पद्यले पति परदेशमा रहँदा कुलवधूले ग्रहण गर्न पर्ने ब्रह्मचर्यादि व्रतको वोध गराउँदै यसै अवस्थामा लंकेश रावण आई म रत्नेश्वर हूँ तिमी स्त्री रत्न हौ, आदि स्त्रैण तथा कामुक भाव देखाउँदा "पाजी रावण, बोल्दछस् कति वहुत् दुर्वाक्य बक् बक् गरी, राघव् देखि डराई छल्न भनि एक सन्यासिको रूप धरी जस्तै यज्ञ विषे हवी कुकुरले हर्छन् उसै चालले राम लक्ष्मण नहुँदा हरिस् त वुझिले मर्लास् यसै कालले ।" आदि समेत पद्यवाट आर्य नारी जगत्को महान् पातिव्रत्य हिम्मत् चारित्रिक उत्कर्ष आदर्श-दर्शाई समस्त नेपाली महिला वर्गलाइ वीराङ्गना बन्न सिकायाको छ ।

यसरी खोरको वातावरणले कविको प्रतिभा सम्बन्धि प्रभाव कुण्ठित भएन । श्री रामजीको इच्छा छुटकारा पछि पुनः प्राप्त भयो । ११ वर्ष लगाएर नेपालीको अमूल्य ग्रन्थ रत्न अरू दुई काण्ड पनि

# भानु भक्तको सामाजिक र साँस्कृतिक देन ।

—पं० तारा प्रसाद उपाध्याय
जनकपुरधाम ।

आज भन्दा १५८ वर्ष अघि पश्चिम नेपाल स्थित विद्वत्प्रसूताभू, गण्डकी अञ्चल तनहुँ प्रदेश रम्घा चुँदी बेंसिमा पण्डित श्री कृष्ण आचार्यका ज्येष्ठ पुत्र धनञ्जयको पुत्रका स्वरूपमा १८७१ विक्रमीय सम्वत्‌को आषाढ़ २९ गतेका दिन नेपाली साहित्याकाशका तारा सुन्दर भविष्यका प्रभाले परिपूर्ण भानुको उदय भएको हो ।

अवश्यनै यो शुभावसर नेपाली साहित्यको सुप्रभात र नेपालीको सुनौलो विहान थियो । सृष्टिका क्रममा नेपालान्तर्गत भूभागको शोभातिशय सौन्दर्यमय-ताल कुञ्ज हिम शिखर उपत्यका झर्ना आदि विविध उपकरणका प्राचुर्यको सुन्दर शोभालाई देखेर प्रकृति पनि आफ्नो सृष्टि क्रममा कृतकृत्य भएकी अवश्य नै हुन् । कवि आफ्नो लेखनीले कल्पना गर्दछन् कि देवता स्वर्ग हो भन्छन् बगैंचा भन्दछन् चरा । मान्छे यो देश हो भन्छन्, श्रीविन्दु भन्दछिन् धरा "अस्तु देवताको स्वर्ग चराको बाग नेपालीको देश पृथ्वीको भव्यभालको सिन्दूर 'विन्दुको' परिकल्पना गरिएको छ । त्यस्मा पनि गण्डकी अञ्चललाइ माझ मानी सुन्दरै सौन्दर्यम् ठानी छवटै ऋतुको वास यहाँ देखिन्छ, सुन्दर ऋतुको राजधानी हो, रम्य गण्डकी अञ्चल" सारा नेपालीका छोरा यसका हकदार छन् । जुनेली रातको शोभा सबैले हेर्न पाउँछन्" सल्‌ल सलसली फलफुल मिश्रित जल बहाउने रिस्तीनदीका किनारामा बागबगैचाले भरिपूर्ण भएको फलका वृक्षका पाकेका रसाल फल नेर फुलका लहरा बेरिँदै गैदिनाले खिलेका फुलको शोभा रस्मि र गलकै पाकि सकेका फल रसमाधुर्यमा विमुग्ध भ्रमर समूहको भूँ भूँ भूँ शब्द गायनले सदा गुञ्जायमान घर बारिका वरि परि फल-फुलका हारमा पिपिरा मुना मञ्जरीले मनोरम्य पूर्वोत्तर स्थित हिम राशि सुशोभित हिमालयबाट झरेका हिमकण सम्मिश्रित झर्नाले सारै हरिया वृक्ष लता गुल्म सिञ्चन भै रहेको प्राकृतिक

अति सौन्दर्यमय, रम्घा गाउँमा मुना पिपिरा आदि प्राकृतिक किशलयनै साथीका स्नेहमय सहवासमा भानुको वाल्यावस्था क्रमशः वितदै गयो । वाज्ये श्री कृष्ण आचार्यका बिचक्षण प्रशिक्षण द्वारा सुशिक्षित भानुको हृदयाकाशमा देश भक्ति र सामाजिक विचारका साथै प्रौढ दार्शनिकताको गम्भीर पाण्डित्य प्राप्त भै सकेको थयो !

एकदिन घाँसीका सामाजिक सदुपदेशले सामाजिक सेवा भावनाको एकाएक प्रस्फुटन भै भानु भन्दछन्, मो भानु भक्त धनी भै कन आज यस्तो, संसारका ऐतिहासिक सा'हत्यिक महाविभूतिहरूका साहित्यिक स्रोत प्रस्फुटन सम्बन्धि घटना क्रम नियालेर हेर्यौं भने केहीन केही यस्तै घटना नै प्रेरणाको साहित्यिक मुल फुटने संयोग बनेको देखिन्छ । जस्तै आदि काव्य वाल्मीकि रामायणका प्रणेता मुनि वाल्मीकिलाई स्नान गर्न जान लाग्दा देखिएको क्रौञ्च जोड़ीलाई व्याधाको प्रहार, मानस रामायणका प्रणेता श्री तुलसी दासलाइ स्त्रीको वाग्वाण त्यस्तै नेपाली भाषाका आदि कवि श्री भानुभक्तजी लाई घाँसीको सदुपदेश साहित्य धारा प्रस्फुटनको स्रोत वन्न गएको पाइन्छ

भानु मनमनै गुन्दछन्. माता-पिताले तपस्या गरेर ईश्वर पुकारेर धर्म-अर्थ काम मोक्ष पुरुषार्थ चतुष्टयवान् सन्तानका लागी प्रयत्नशील भएको संसारमा नै देखिन्छ । पौरुषेय परिवारलाइ नै बनाएको समाज अर्थात् पुरुषको उपार्जनमा नै जीवन अवलम्बित परिवार भएको समाजमा जन्मेको पुरुष आफूले उपार्जन गरेको पुरुषार्थ अर्थात् धर्म अर्थ काम मोक्षको फल सरसन्बन्धी इष्ट-मित्र स्त्री पुत्रादिमैं सीमित रहन्छ, सदा परिवारले घेरिएको हुन्छ अनि त्यो व्यावहारिक पुरुष व्यक्ति हुन्छ । त्यस्ता व्यक्ति कति आये कति गये त्यस्ताको अस्तित्त्व कतै केही भेटिंदैन ।

तर आफ्ना पौरुषेय समाज हुन् भन्ने ठाँनी परसम्म स्वार्जित पुरुषार्थ चतुष्टय, उपार्जन, समाजलाई प्रदान गर्न चाहने, गर्न प्रयत्नशील रहने र गरि छोड़ने महामना पुरुष व्यक्ति रहदैन, उ महापुरुष हुन्छ त्यो मनस्वी मर्दैन अमर रहन्छ, उसका कीर्ति देह सदाका लागि जीवित रहन्छ ।

अनि भानु फिरङ्गीका काल जस्ता कुचक्रले छिट फुट भएका नेपाली समाजलाइ कुन यस्तो साधनछ एक सूत्रमा वाँधी राष्ट्रियताको ज्योति जगाउन सकिन्छ,

थपेर पूर्ण भयो। एही नै पहिलो शुद्ध नेपाली भाषाको ग्रन्थ पनि भयो। जनहितका भावनाले रचेको रामायण ठूला र विद्वान् देखि बाहुखरो जान्ने ससाना सम्मले चाखमानेर पढ्ने प्रिय पुस्तक बन्यो। साधारणका झोपड़ीमा र महान्‌का महलमा प्रवेश गरेर मौलिकता लिने पुस्तक रत्न पहिलो एही नै ठहरियो।

यस रामायणले नेपालीलाइ एकता दियो। समझदारी दियो र साथै नेपालीको एकमात्र प्रिय राष्ट्रभाषा नेपाली पनि दियो। अनि मोतीराम लेखनाथ-समजी-देवकोटा श्री ५ महेन्द्र आदि देखि साधारण प्रजा सम्म अनगिन्तिमा प्रेरणा-भावना-चेतना-भरेर अघि, सारी भाषा जगतको प्रति स्पर्धामा नेपाली भाषालाइ उत्कर्षमा पुऱ्याउने अमर देन पनि दियो।

समाजका सेवा भावनाले भानुले रचना गरेका अरू २ ग्रन्थहरू पनि छन्, जस्तै गर्भवासमा छँदा जीवले ईश्वर सङ्ग प्रतिज्ञा गरेका उदाहरणको माध्यमबाट साँसारिक प्रवल मायामा न भूलि कर्त्तव्य पथ देखि विचलित न भै मोहमयी माया पार गर्न 'भक्त माला'को रचना गरेर समाजलाई सङ्केत गरेको छ।

प्रश्नोत्तरी एवं वधूशिक्षा आदि ग्रन्थको रचनाले समाज स्थित परम्परागत अन्धतम अशिक्षा ग्रसित ग्रामीण आवाल वृद्ध नर-नारी कूपमण्डूक प्रायः पिंढ़िकै शरण वसेका समस्त समाजलाई मानव शिक्षाको माध्यमबाट मनुष्यताको परिधि भित्र रही व्यवहार गर्न पथ-प्रदर्शन गरेको छ।

साधारण एक धोबीका उक्तिले प्रियतमा लाई त्याग गरी समाजको समादर रत राम र राम राज्यको आद्योपान्त रोचक एवं समुज्वल पवित्र राम चरित्र युक्त भानुभक्तीय रामायणले क्षणिक तुच्छ स्वार्थमा अन्ध भएर समाजलाइ लत्थाएर मदान्ध भै न हिंड़नलाइ समस्त नेपाली समाजमा राष्ट्रिय एकतालयाइ समाजको अभ्युत्थानको बाटो देखाउने सामाजिक साँस्कृतिक ज्ञान रश्मि युक्त नेत्र प्रदान गरेको छ।

"सारङ्गी"को विज्ञापन दरः-

| | | |
|---|---|---|
| गाताको अन्तिम पृष्ट | रू० | ४००।- |
| ,, भित्रि ,, | ,, | ३२०।- |
| साधारण (पूरा) ,, | ,, | २००।- |
| ,, (आधा) ,, | ,, | १२०।- |
| ,, (चौथाई) ,, | ,, | ७०।- |

"सारङ्गी"को चन्दा दरः-

| | | |
|---|---|---|
| एक प्रति | रू० | ११५० |
| वार्षिक | रू० | ८।०० |
| ,, (हुलाकबाट) | रू० | ६।०० |
| भारतमाः- एक प्रति | १।१० भा० | रू० |
| वार्षिक (हुलाकबाट) | ६।५० ,, | ,, |

# भानु-सुषमाः-

—प्रो० रोहिणी वल्लभ शर्मा

(१)

जडी नौला ढाँचा विपुल तहका स्वप्न-गतिको
निशाको व्यामोह-स्थिति-वश विहोशी सु-मतको-।
लुकेको चैतन्य-च्छबि विच जगाई मधुरिमा,
शुभो भाषा भई अवतरित भो भानु-सुषमा ॥

(२)

सुनौला-चाहाका मृदुल-दलका राग निखनी
कलाका पारामा सु-मन-कलिका जगमग वनी ।
छचल्केको दिव्य स्व-रस-छहरालाई बुइं ली
समृद्धी औंल्याई मरुमय धरा भावुक भई ॥

(३)

प्रभातीका गीती ललित-गरिमाका सुर झिकी
चराका स्वच्छन्द प्रकृत-लयमा संस्कृति भरी ।
जगत् जागा पार्ने सुर लिइ अँगाली नव छटा
हिमाली हावामा मुखरित भयो सौहृद-कथा ॥

(४)

प्रतीतीका छाँगा छर-चर गराई हिम-गिरी—,
सु-रङ्गी भङ्गीमा झट विविधका जाति रस ली।
सँगाली सद्-रीती नवल-प्रतिभाको कल-कल
छछल्कायो एकै प्रणय-गुणमा गाँसि सु-नद ॥

(५)

प्रभाको नौरङ्गी जलप जडिएको मधुमय
अनौठा बान्कीमा मृदुल-मुहुनीका किशलय।
बयेली खेल्दाछन् प्रकृति रंगदै शान्त-हृदय,
विभूती यी व्यापी मुसु-मुसु छ नेपालि-जगत ॥

(६)

सँगाली आलोक—क्रम उदयको उद्यम-मय,
जगाई आदर्श स्थिति सहजको स्वर्णिम लय।
उकासी सद्-दीप्ति स्थिर-हृदयका भित्रितहको,
अहो ! भानु-ज्योती सुकृत-छवि सौहित्य-ततिको ॥

ज्ञानकूप, जनकपुरधाम

●●

# भानुभक्त सामञ्जस्यका प्रतिरूप

—ले० पं० सोमनाथ घिमिरे व्यास ।

हिन्दू धर्मावलम्बी सनातनी आर्य-समाजी वौद्ध जैन, जो सुकै होस् धर्म-रक्षा र राष्ट्र-रक्षाका निमित्त एक भएर कार्यमा सफलता प्राप्त गर्नु पर्छ । आर्य-समाजी केवल चार संहितालाइ वेद मान्दछन । सनातनी ११३१ संहिता र व्राह्मण, आरण्यक, तथा उपनिषद्लाइ पनि वेद मान्दछन् । आर्य-समाजी निराकार परमेश्वर मान्दछन् सनातनीहरू साकार ईश्वर अवतारवाद र निर्गुण निराकार सगुण निराकार, सगुण साकार समेतलाई मान्दछन् । वौद्ध, जैन आदि वेदलाइ विलकुल मान्दैनन् । परमाणुहिंसा मान्ने जैन, र स्थल हिंसा मात्र मान्ने वौद्धमा सामान्य भेद यिनै हुन् ।

सृष्टि देखि सनातन धर्मरक्षक क्षत्रिय जातीका राजा द्वारा शासित नेपाल राष्ट्रमा धार्मिक मत मतान्तरको मार्मिक व्याधि दक्षिणात्य भूमिमा झैं स्पर्श गर्दै आएको वेला भानु भक्तको जन्म भयो ।

मानव जीवनमा धर्मको स्थान सर्व-श्रेष्ठ छ । धर्महीन व्यक्ति माझी न भएको तूफानको डुङ्गा जस्तै हो । धर्म छ भने जीवनको नौका विस्तार-विस्तार लक्ष्यमा पुऱ्याउन समर्थ हुन्छ । वेद शास्त्र आदि-मा प्रशरत यसै कुराको वोध गराइयेको छ ।

कतै-कतै यस्तो पनि हुन जान्छ कि धर्मको खोज गर्दा गर्दै खोज गर्ने वाला नै वेपत्ता हुन्छ । मार्ग दर्शक न पाएर अधर्मलाइ धर्मको रूप दिन थाल्दछ । तेसै कुरालाइ लिएर गोस्वामी तुलसी दासले वेदादि शास्त्रको निचोर थोरै शब्द मैं व्यक्त गर्नु भएको छ—

परहित सरिस धर्म नहिं भाई ।
परपीडासम नहिं अघभाई ॥

अर्थात् परोपकार समान धर्म कुनै छैन, पर पीडा समान पाप पनि कुनै छैन । वास्तवमा भन्ने हो भने गोस्वामी-जीको उक्तिमा प्रेम, दया, मैत्री, उदारता सहज समवेदना करुणा मुदिता सवको समन्वय एकै ठाउँ हुन्छ ।

धर्मकै लक्ष्य पूर्ति लाइ लिएर हाम्रा आदि कवि भानु भक्त जी भन्नु हुन्छ—

गजाधर सोतीकी घर बुढि
अलच्छिन् कि रहिछन् ।
नरक् जाना लाई सब सित
विदावारि भइछन् ॥

गृहस्तहरूको जीवन स्वर्ग सुख भोगानुकूल वनाउनु अथवा नरक दुखानुकूल वनाउनु गृहिणीको मुख्य हात हुन्छ। पत्नीका चरित्रले धर्मले सद्‌गुणले स्वभावले पतिको अभ्युन्नति अवश्यम्भावी छ।

त्यो कुरालाई मिल्दो ग्रामीण भाषामा लेखेर आवाल वनितामा बोध गराउनु भएको छ। माथि बताए अनुसार विभिन्न धर्मावलम्वीहरूलाई सजिलैसँग एउटै सनातन तन्तुमा प्रविष्ट गराउन कवि भानुभक्तले रामायण जस्तो सुमधुर आदि काव्यको पद्यानुवाद गर्नु भएको हो। समय-समयको आफ्ना जीवनको इति वृत्त लेख्ने बहानाले सामाजिक, धार्मिक, साहित्यिक, भौगोलिक, आदि विषय आफ्नो कवितामा सम्मिलित गराउनु भएकोछ।

संस्कृत वाङ्मयमा सूर्यलाई भानु भनिन्छ—आदि कविनी खास गरेर समाजको कालिमा र शीतता हटाई स्वच्छ सुन्दरतामा प्रविष्ट गराउन अवतरित भएका हुनु हुन्थ्यो।

अखिल जगदात्म स्वरूपेण काल स्वरूपेण चतुर्भूत निकायानां भगवान् एक एव अर्थात् जस्तो सूर्यनारायण यावत् जीव मात्रका प्राणस्वरूप हुनुहुन्छ। सूर्यनारायण वेगर स्वेदज, अण्डज, जरायुज उद्भिज्ज चारै प्रकारका जीवधारीहरूको वृद्धि हुन सक्तैन।

त्यस्तै संस्कृत न जान्ने ब्राह्मण, क्षत्रिय, वैश्य, शूद्र आदि जातिहरू गहन संस्कृतमय काव्यमा प्रविष्ट हुन सक्तैनन् भनेर नेपाली कविता रूपी प्रकाश पुञ्ज फैलाउनु भएको हो।

बत्तका नजीकै अँध्यारो भए झैं कविका नजीकमा वस्ने हामीहरूले कविको महत्व बुझ्न सकेनौं। जब हाम्रा प्रवासी बन्धुहरूले दार्जिलिङ्गमा प्रतिमा वनाएर पार्कका मध्य भागमा स्थापित गरी कविका कृतिहरूको व्याख्यान गर्दै जयन्ती मनाउन थाले। त्यस पछि विस्तार विस्तार हाम्रा आँखा खुल्दै आए।

आज जयन्ती मनाउने विशेषांक निकाल्ने जो प्रेरणा हामीलाई मिल्यो त्यो प्रवासी हाम्रा दाजु भाई दिदी बहिनीकै देन हो भन्न सकिन्छ। अस्तु।

# [ जय-जय हे नेपाल ]

पण्डित जीवनाथ झा
प्राचार्य, याज्ञवल्क्य सं० महाविद्यालय
जनकपुरधाम

**जय-जय हे नेपाल !**

( १ )

विश्वविदित अध्यात्म ज्ञानमा
सुचिर ख्यात शुभ-शान्ति दानमा
जनक-बुद्ध-अवदान—मानमा
जसको उन्नत भाल

( २ )

पृथ्वीनारायण-भुज-मदले
भीम आदि पृथुसुभट-प्रमदले
सदा प्रशंसित बिरुद निगदले
रिपुमाथी जो काल

( ३ )

त्रिभुवन वीर भूपवर—लालित
वीर-महेन्द्र बाहु—परि पालित
शान्ति-अमल जलले प्रक्षालित
विश्व समर्पित माल

( ४ )

विकसन पथमा समुद समागत
धर्मशास्त्र प्राचीन प्रथा—मत
जहाँ सफल जनहित पञ्चायत
जसको सुयश विशाल

( ५ )

वर्तमान मध्यस्थ नीतिको
निज संस्कृति अनुकूल रीतिको
एकमात्र आश्रय अर्भीतिको
जन—मानस—सु मराल

( ६ )

पशुपति स्वय जहाँ शमसाधन
देश प्रेममा मग्न सकल जन
विजय पताका सुदृढ़ सनातन
जसको धवल हिमाल

( ७ )

कविवर-भानुभक्तको वाणी
भीम अमरको महा कृपाणी
गुह्येश्वरी जहाँ कल्याणी
अनुपम गौरव—जाल

( ८ )

पूज्य-भानुकवि-कृत रामायण
गर्दै पाठ अपुस्तक अनुक्षण
हिन्दु सबै बन्छन् गौरवचण
गत, अगामी, हाल

**जय-जय हे नेपाल !!!**

# भानुभक्तको भाषा

— माधव प्र० उपाध्याय

आदिकवि बाल्मीकिको संस्कृत साहित्यमा जुन स्थान छ, गोस्वामी तुलसी दासजीको हिन्दी साहित्यमा जुन स्थान छ त्यस्तै स्थान नेपाली साहित्यमा कविवर भानुभक्त आचार्यको छ। भानुभक्तका पूर्ववर्ती कतिपय नेपाली कविहरू हुँदाहुँदै पनि हामी भनुभक्त आचार्यलाई आदिकवि भनेर श्रद्धाले सम्झन्छौं। यसमा निश्चय नै भानुभक्तका पूर्ववर्ती कविहरूको दाँजोमा उनको काव्यात्मकता बढी छ र साँच्ची भन्ने हो भने भानुभक्त आचार्यले नै नेपाली कवितामा सहज प्रवाहको प्रस्फुरण गराएका छन्। त्यसले उनी नेपाली साहित्यका आदि कवि हुन्।

भानुभक्त पूर्व झण्डै पौने शताब्दी (७५ वर्ष) भन्दा बढीको साहित्यिक परम्परा नेपाली साहित्यमा वर्तमान छ। तर भानुभक्त अगाडिका कविहरूमा भानुभक्तका जस्ता भाषा-शैलीको अभाव देखिन्छ। साँच्ची भन्ने हो भने भानुभक्तले नै आधुनिक नेपाली भाषा र साहित्यका पथ प्रदर्शन गरेका छन्। भानुभक्तकै प्रेरणाले मोतीराम भट्ट र लेखनाथ अनि लेखनाथ पछि लक्ष्मी प्रसाद देवकोटा र बालकृष्ण सम आदि कविहरू नेपाली साहित्यमा अवतीर्ण भएका छन्।

कविवर भानुभक्त आचार्यले आफ्नो कवितामा तत्कालीन प्रचलित नेपालीको प्रयोग गरेका छन्। विद्वान्हरूको बिचारमा भानुभक्तले प्रयोग गरेको भाषा राजधानी (कान्तिपुर) को तत्कालीन प्रचलित भाषा हो। एक थरी विद्वान् भानुभक्तको भाषालाई तनहुँको तत्कालीन प्रचलित भाषा नै हो र भानुका कृतिहरू तनहुँको स्थानीय भाषामै लेखिएका हुन्, यद्यपि उनमा कान्तिपुर राजधानीको नागरी भाषाको प्रभाव पनु सम्भव र स्वाभाविक छ भनी आफ्नो राय व्यक्त गर्दछन्। जे होस्, भानुभक्तको भाषा जुन सुकै ठाउँको भए पनि उनको भाषा परिमार्जितको साथ साथै सहज र स्वभाविक भएको कुरामा दुइ मत हुने छैन। कविवर भानुभक्तको भाषामा हामी सरसता, कोमलता र मिठासको साथ साथै ओज र प्रवाह पनि प्रचुर मात्रामा पाउँछौं।

काव्य भाषाका तीन गुण मानिएका छन्—ओज माधुर्य र प्रसाद । वीर रसका कविताका लागि, ओज गुण परमावश्यक छ । त्यस्तै शृङ्गार आदि कोमल रसको लागि माधुर्य र प्रसाद गुण नभई हुंदैन । भानुभक्तका कृतिहरूमा र खास गरी रामायणमा भानुभक्तबाट काव्यका सबै गुणहरू र रीतिहरूको समावेश गरिएको पाइन्छ ता पनि भानुभक्तका काव्यमा प्रसाद गुण र वैदर्भी रीतिको विशेषता छ। भानुभक्तले यथा प्रसंग नवै रसमा आफ्नो काव्यधारा बगाएका छन् । केही उदाहरण द्वारा भानुभक्तका काव्य-गत विभिन्न गुण र रीतिलाई दर्शाउनु अप्रासंगिक हुने छैन । प्रसाद गुण र वैदर्भी रीतिको कविताको एक उदाहरण रामायण बाट यस प्रकार छ :—

गयो खान्या वेला मकन त मिल्यो राज्य बनको ।
भरतूले राज् पाया यहिं बसि गरून् राज्य जनको ।।
बिदा बक्स्या जावस् खुसिसित म जान्याछु बनमा ।
म चाँडै फिर्न्या छू विरह नहवस् कत्ति मनमा ।।

(अयोध्याकाण्ड पृष्ठ ४२)

त्यस्तै ओज गुणको उदाहरण पनि भानुभक्तका कवितामा पाइन्छन् कान्तिपुरीको वर्णनमा कवि भन्दछन् :—

तरवार कटार खुँडा खुकुरी पिसतोल र बन्दुक सम्म भिरी ।
अति शूर र वीर भरी नगरी, छ त कुन् सरि कान्तिपुरी नगरी ।।

त्यसै गरी रामायण सुन्दरकाण्डमा सीताजीले रावणलाई भनेको यो उक्तिः—

पाजी रावण ! बोल्दछस् कति वहुत् दुर्वाच्य बक् बक् गरी ।
राघव् देखि डराइ छल्न भनि एक् सन्न्यासिको रूप् धरी ।।
जस्तो यज्ञ विषे हवी कुकुरले हर्छन् उ‥ चालले ।
राम् लक्ष्मण् नहुँदा हरिस् तँ बुझिले मर्लास् यसै कालले ।।

प्रसाद गुणको अर्को एउटा उदाहरण यस्तो छ :—

देश् देश्का बाटुलिन्छन् बुझ तिमि मनले बाटका पाटि माहाँ ।
बात्चित् गर्दै रहन्छन् खुशिसित मनले बन्धु झैं राति ताहाँ ॥
प्रातःकाल् भो जसै ता उठिकन ति सबै दश् दिशा लागि जान्छन् ।
बन्धुको संग यस्तो बुझिकन गुणिले दुःख सुख् एक मान्छन् ॥

( अयोध्या काण्ड पृष्ठ ४४ )

भानुभक्तको एउटा ठूलो विशेषता के छ भने उनका पूर्ववर्ती धेरै कविहरूको तुलनामा अप्रचलित भाषाको प्रयोग आफ्ना रचनामा गरेनन् । उनका पूर्ववर्ती कविहरूले प्रायशः व्रज-भाषाका कविहरूको अनुकरण गरी व्रज-भाषाबाट शब्दहरू ग्रहण गरे र केही फारसीका शब्दहरूको पनि प्रयोग गरे जुन जनसाधारणमा प्रचलित थिएनन् । तर भानुभक्तले भने जनसाधारणमा प्रचलित भएको भाषाको मात्र प्रयोग गरेको पाइन्छ । उदाहरणको लागि २।४ श्लोक अघि सार्न सकिन्छ :—

उदयानन्द अर्यालको यो श्लोक :—

अकवरि अकवर्को छाप् असर्फी लियाका,
रयतसग लियाकत् चौधरी गाँसियाका ।
फउज खसि र माछा वस्त्र तेल् घ्यू लियाका,
नृपति दस्थ अमृत् मूर्तिमा रस् लियाका ॥

मा रयत, लियाकत र चौधरी आदि शब्द जनसाधारणको लागि अलि दुर्बोध्य छ, किनभने ती शब्दहरू नेपाली प्रचलित भाषाको शब्द भण्डार बाहिरका विदेशी शब्दहरू हुन् ।

कवि इन्दिरसले गोपिका स्तुतिमा प्रयोग गरेको यो श्लोकः—

विषय विष् भयो व्याल दुष्ट भो ।
विजुलि अग्नि भो आँधि भौंरी भो ॥
मय कि सन्तती लोकभीति भो ।
रिस निहार् भयो यो त दुःख भो ॥

मा पनि नेपाली भाषामा खट्किने खालका शब्दहरू परेको स्पष्ट छ। कवि विद्यारण्य केशरी अर्ज्यालको गोपिका स्तुतिको—

चीर खैंचत दुशासन घेरी
आइ नाथ शरणागत तेरी
लाज राख कुरुका विच मेरी
हूँगि मैं जनम जन्मकि चेरी

लाई त नेपाली श्लोक नै होईन भने पनि हुन्छ।

कवि भानुभक्त के समकालीन कवि रघुनाथ पोखरेलको भाषा पनि त्यति सरल र प्रवाहमय छैन। रघुनाथ पोखरेलले अनुवाद गरेको सुन्दर काण्ड (रामायण) र भानुभक्तले अनुवाद गरेको रामायण सुन्दरकाण्डलाई दाँजेर हेर्ने हो भने दुवको भाषा-शैलीमा भएको अन्तर अझ स्पष्टिने छ।

अध्यात्म रामायणको सुन्दरकाण्डमा हनुमानने सर्व प्रथम लंका नगरी टाढावाट देख्दा खेरिको वर्णन संस्कृत श्लोकमा यस प्रकार छ—

ततो दक्षिण मासाद्य कूलं नाना-फलद्रुमम्
नाना पक्षि मृगाकीर्णं नानापुष्पलताऽऽवृतम्
ततो ददर्श नगरं त्रिकूटाचल-मूर्द्धनि
प्राकारै र्बहुभि र्युक्तं परिखाभिश्च सर्वतः

यस श्लोकको अनुवाद रघुनाथ पोखरेलले यस प्रकार गरेका छन्—

ति जाँदा जाँदामा दखिन तिरका केहि तटमा
पुग्या देख्या फल् फुल् वहुत मृग पन्छी नगिचमा
पछी देख्या लंका त्रिकुट परवत् का शिखरमा
अनेक् पर्खाल् खावा चहुँ दिश हुनाले गुपतमा

यस श्लोकको भानुभक्तले गरेको अनुवाद रघुनाथको भन्दा निकै सरस र प्रवाहमय देखिने छ—

ताहाँ देखि कुदी गया र हनुमान् पौंच्या जसै तीरमा
लंका पूरि तहाँ त्रिकूट गिरिका देख्या उपर् सीरमा

× × ×

वरिपरि तहिं तीरैमा पनी वृक्ष फल् फुल्
भरि छ जउन बन्मा गर्दछन् पक्षिले गुल्
भ्रमरहरू लताका फूलमा हल्लि हल्ली
घुनुनु घुनुनु गर्दै हिंड्दछन् वल्लि वल्ली
नजर वरिपरीको जो छ शोभा नजर् भो
त्रिकुट गिरि उपर्का पूरीमा फेर् नजर गो
वरिपरि परखाल् छन् बीच बिच्मा छ खावा
सहज त अरुले ता गर्न को सक्छ दावा
अति तखत पर्याको खुब अगम् देखि लंका
यहि घडि पसि जाँ की राति जाँ एति शंका

भानुभक्तले प्रस्तुत श्लोकको अनुवाद रघुनाथको जस्तै चार पदमा मात्र सीमित राखी गर्दैनन् । उनका पदहरू बढी छन् र भाषामा पनि प्रवाहको साथै सरसता सरलता र स्पष्टता दृष्टिगोचर हुन्छन् ।

भानुभक्तको भाषामा भाव सँगसँगै वहन सक्ने शक्ति छ । निम्नांकित श्लोकहरूमा भाषा र भाव साथ साथै वहेको स्पष्ट अनुभव हुनेछ—

न कैल्हे भक्तीले गुरुचरणको ध्यान गरियो
न ठाकुर्को पूजा गरि तुलसिको पत्र धरियो ।
दया भो स्वामिको भनिकन भन्या पार तरियो
अवश्यै सांचै हो नतर यमका पाश परियो ॥

× ×

मेरा इनार न त सत्तल पाटि क्यै छन्,
जो धन् र चीजहरू छन् घर भित्र नै छन् ।

यस् घाँसिले कसरि आज दिएछ अर्ति,
धिक्कार हो मकन बस्नु नराखि कीर्ति ॥

उपर्युल्लिखित श्लोकहरूमा कविको मनमा भएको भावलाई कविको भाषाले सफलता साथ वहन गरेको छ। अतः कविको भाषालाई भावानुसारिणी पनि भन्न सकिन्छ।

बोलचालमा प्रयुक्त हुने शब्दहरूको आफ्ना कवितामा प्रयोग गरी भानुभक्तले आफ्नो भाषालाई सजीवता प्रदान गरेका छन्। भाव अनुकूल बोलचालका शब्द-हरूको प्रयोगले कवितालाई उत्कृष्टता प्रदान गर्दछ। रामायण किष्किन्धाकाण्डमा (अध्यात्म रामायणमा) भएको श्लोक—

प्रेषयमास बलिनो वानरान् वानरर्षभः।
दिक्षु सर्वासु विविधान् वानरान् प्रेष्य सत्वरम् ॥

लाई भानुभक्तले—

हूकुम पाइ पठाइ वानरहरू उर्दी दिया कामको ॥

भनी अनुवाद गरेका छन्। त्यस्तै अर्को श्लोक—

व्यथिताः साश्रुनयना युवराज मथाऽब्रुवन् ॥
किमर्थं तव शोकोऽयं वयं ते प्राण-रक्षकाः ॥

लाई भानुभक्तले यसरी अनुवाद गरेका छन् -

हे साहेव ! यहीं वसौं यहिं बस्या कुन् पाठले मार्दछन् ?

भन्नाको तात्पर्य के भने भानुभक्तले उपर्युक्त प्रसंगमा परिस्थिति अनुकूल बोलचालको भाषा प्रयोग गरी भाषाको सौन्दर्य बढाएका छन्। फौजका जवानले आफू माथिको अधिकारीलाई 'साहेब' भन्दछन्। तसर्थ अङ्गदको लागि प्रयोग भएको 'युवराज' शब्दको लागि भानुभक्तले 'साहेब' भनी गरेको अनुवाद अधिक श्रुति परिचित हुनुको साथै उपयुक्त हुन आएको छ। यसैगरी अन्यत्र पनि भानु-भक्तले बोलचालका प्रचलित शब्दहरूको प्रयोग गरेका छन्—

बस्निन् बस्तिन पो पनी भनि भन्या काटेर टुक्-टुक् गरी,
तर्कारी भुट्वा बनाउनु असल् मीठा मसाला धरी ॥

× × ×

काम् बिल्ला भनि सानु बोलि झटपट् बोल्या हनूमान् तसै ।

× × ×

सिप सित गरी बिन्ती खुप् दयालु बनाया ।

× × ×

बिपत परि रह्याकी छू मता चानु मानू ।

× × ×

जाओस् ठुटो पुच्छर लीकन फर्कि वाहिं ।

× × ×

चाहींदैन रसद् सबै बिरहरू खान्छन् फलै फुल् फगत्

× × ×

खुरु खुरु यहि आई छोरि सुम्प्या करैले

× × ×

आएँथे मनका कुरा चरणमा भींजो गरं क्यै भनी

× ×

संधै हुका नारी थरकि फिंजी खेल्छौ चयनमा

× ×

कुन पाठ्ले व्रतबन्ध पार् गरुँ भनी देख्छू अंध्यारो जगत्

इत्यादिको प्रयोग हेर्नाले भानुभक्तले बोलचालको भाषाको प्रयोग प्रचूर मात्रामा गरेको देखिन आउँछ ।

यसैगरी भानुभक्तको भाषामा मुहावराको प्रयोग भएको पनि हामी उनका कृतिहरूको अध्ययनबाट देख्तछौं । तलका केही उदाहरणहरूले यस कुराको पुष्टि गर्नेछ :—

कृपा राख्या जावस् नतर त अनाथ् बीच परुँला ।

× ×

परन्तु हक् मर्नौ छ त बटुलि क्या गर्नु धनले ।

× ×

सुन्या दन्तबझान आज धरको कर्कर् गर्याको उसै ।
यस् रितूले अति खुस् गराइ परिवार् सब्लाइ हातमा लिउन् ।
आखिर चिज् घरमा भई वखतको काम् सब् बिती नै गयो ।
यति गरि तिमिले खुप् युक्तिले विन्ती लाया ।

× × ×

छोरो रावणका निभाइ हन ता साम्ने उसैका गयो ।

× × ×

यो फौज् वानरका ठुलो छ बलियो लड्न्या छ घूँडा धसी ।
अग्नीमा पनि पस्नु पर्दछ भन्या पस्न्याछ कम्मर् कसी ॥

× × ×

केवल् गफै गरि मुखै तरवार माध्र्या ।

इत्यादिको यथा स्थान उचित प्रयोगले भानुभक्तको भाषामा प्रौढता आएको छ । यसले भानुभक्तको भाषामा स्वाभाविकता प्रदान गरी चमत्कार पूर्ण मनोहारिता ल्याएको छ ।

भानुभक्तका भाषाको एउटा अर्को विशेषता के छ भने उनी कुनै पनि कुराको चित्र शब्द द्वारा उतार्न सफल भएका छन् । सरल सहज भाषामा पाइने कुनै

दृश्य शब्द चित्र कोर्न उनी सिपालु छन्। भानुभक्तको भषामा पाइने गुणहरू मध्ये चित्रमयता पनि एक हो। उदाहरणका लागि तनका श्लोकहरू अघि सार्न सकिन्छ—

रामका बिरहमा दुःखित सीताको अशोक वाटिकामा हुँदाको चित्र—

भोकि मैलि निन्याउरी नत कपाल् कोन्याकि सब् केस् उसै।
लङ्का मात्र गन्याकि खालि भूमिमा रूदैं बस्याकी यसै॥
राम् राम् राम् यति मात्र बोलि रहँदी देख्या र साना भई।
पात्का अन्तरमा लुक्या ति हनुमान् रुख्का उपर्मा गई॥

अर्को राजधानी कान्तिपुरीको वर्णन—

चपला अवलाहरू एक् सुरमा,
गुनकेशरिको फुल ली शिरमा।
हिंड्न्या सवि लीकन ओरिपरी,
अवरावति कान्तिपुरी नगरी॥

त्यसैगरी नालाग्र्यूको वर्णनमा पनि—

यति दिन पछि मैले आज बालाजी देख्याँ
पृथ्वी तल भरीमा स्वर्ग हो जानि लेख्याँ।
वरिपरि लहराका झूलिवस्न्या चरा छन
मधुर वचन बोलि मन् लिंदा क्या सुरा छन्॥

यसरी उपर्युक्त श्लोकहरूले भानुभक्तको शब्द चित्र सिर्जना गर्ने भाषिक क्षमतालाई दर्शाउँदछन।

भानुभक्तले आफ्ना कृतिहरूमा संस्कृत तत्सम शब्दहरूको प्रचुर मात्रा गरेका छैनन्। भानुभक्तका कृतिहरू मध्ये "रामायण" र 'प्रश्नोत्तरी" अनूदित रचना हुन्। ती रचनाहरूमा संस्कृतबाट अनुवाद गरिएको हुंदा अनुवादको सरलताको लागि

संस्कृत शब्दहरूको प्राचुर्य रहनु स्वाभाविक थियो । तर अध्यात्म रामायणको दर्शन सम्बन्धी अध्यात्मकै विषयलाई पनि भानुभक्तले सरल नेपाली भाषामा अनुवाद गरी प्रस्तुत गर्न सकेका छन् जसले गर्दा उनको कृति अनुवाद जस्तो न देखिई मौलिक नै भए जस्तो देखिन्छ । आध्यात्मिक दर्शनको गहन विषयलाई नेपाली अनुवाद गरी प्रस्तुत गर्न ठेट नेपालीका शब्दमा अभिव्यक्ति हुन न सक्ने भएर होला दर्शन सम्बन्धी विषयमा कहीं-कहीं उनले संस्कृतका केही तत्सम शब्दहरू प्रयोग गरेका छन् र संस्कृत तत्सम शब्दहरूको प्रयोग भानुभक्तले अन्यत्र पनि केही अंशमा गरेको भएता पनि उनको भाषालाई संस्कृतबहुल भाषा भन्न कदापि सकिँदैन । त्यसै गरी फारसी आदि विदेशी शब्दहरूको प्रयोग पनि भानुभक्तले अतिकम मात्रामा गरेका छन् । उनले दर्शन सम्बन्धी विषयलाई प्रस्तुत गर्न गरेको संस्कृत शब्दहरूको प्रयोग तलका श्लोकमा पाइन्छ—

> जो यो तत्वमसी छ वाक्य यसको वाक्यार्थ जानी लिनू ।
> यस्मा तिन् पदछन् ति तीन पदका तात्पर्यमा मिन् दिनू ॥
> तत्को अर्थ परात्म हुन् ति पदमा त्वं भन्नु जीवात्म हो ।
> इन्को ऐक्य बुझाउन्या असि छ पद् रात् दिन् विचार् गर्नु यो ॥

× × × ×

> दस् इन्द्रिय र मन् अपञ्चिकृत भुत् यो सोह्र जम्मा छ जो
> स्थूलोपाधि भनी कहिन्छ सबको मूल् भोग साधन् छ यो ॥
> येसै स्थूल उपाधि भित्र छ सदा इन्को वियोग् भो जसै ।
> स्थूलोपाधि गलेर जान्छ सबको टिक्दैन एक क्षण् कसै ॥

उपर्युक्त विवेचना भानुभक्तका पद्य रचनाहरूको आधारमा गरिएको हो । भानुभक्तको चिठ्ठी पत्र आदि केही गद्य रचनाहरु पनि उपलब्ध छन् जसले भानुभक्तको भाषाको यथार्थ चित्र प्रस्तुत गर्न सक्तछन् । भानुभक्तले उनका छोरा रमानाथ आचार्यलाई लेखेको चिठ्ठीको भाषा हेर्दा उक्त भाषालाई एकदम सरल र जनसाधारण

रणको बोलचालको भाषा भन्न सकिन्छ । जसमा मुहावरा आदिको राम्रो प्रयोग भएको छ । उदाहणको लागि केही हरफहरु तल उद्धृत गरिन्छ --

" तैंले नपढ्याको ठहराञा भन्या, बावै, तेरा ज्यानको आशा न राखी मान्याँ छु ' कि तैंले मर्नु पर्ला कि मरि सुख पाउन्या छस् कि पढ्हि सुख पाउन्या छस् । आज तेरी आमाका चेत आयेनन् र तलाई षेलन दियी भन्या मैले लात मारी मर्नान्त पान्याको तमासा हेर्लीं । सो जानी तेरी आमाले तंलाई अदवमा राखी घोकाउनु तैंले घोकनु । नहि भन्या तेरो ज्यान साबुद राषन्या छैन ।"

यस प्रकार भानुभक्तको भाषालाई केलाई हेर्दा हामी उनको भाषालाई सरल, सहज र स्वभाविक भएको पाउँदछौं । भानुभक्तले आफ्नो भाषालाई अनावश्यक अलङ्कारको भारले दवाएका छैनन् । उनको भाषा पढेर अर्थ बुझ्नको लागि कहीं पनि अडनु पर्ने स्थिति आउँदैन । उनको भाषाको साथ साथै भाव पनि सल्ल बग्दछ । शब्दाडम्बरको नितान्त अभाव छ । यसैले भानुभक्त स्वाभाविक रूपले नेपाली जन भाषाका कवि हुन् । उनको कविता सरल छ सजिलै सबले बुझ्न सक्ने छ । त्यसैले उनका रचना सबको लागि प्रिय पनि छ ।

भानुभक्तको भाषाको यही स्वाभाविकता र सरलता जस्ता गुणले गर्दा नै उनको भाषा पूर्व मेची देखि पश्चिम महाकाली सम्म विस्तार हुन सकेको छ । उनको भाषाको यही गुणले नै उनले पूर्व मेची देखि पश्चिम महाकाली सम्मका विभिन्न भाषा-भाषी जातिहरूलाई एउटै भाषा नेपालीको सूत्रमा गाँसेर नेपाली जातिको माला निर्माण गर्न सकेका छन् । त्यसैले नेपाल अधिराज्यको एकीकरणमा बड़ा महाराजा श्री ५ पृथ्वी नारायण शाहको जति ठूलो देन छ त्यति नै ठूलो देन नेपाली भाषा र संस्कृतिको एकीकरणमा कविवर भानुभक्त आचार्यको छ भन्नुमा कुनै अत्युक्ति हुने छैन । ●●●

"न ता जीव् मर्न्या हो शरिर साँग लागेर जनको ।
न रातो हून्या हो स्फटिक सव खेल् जान मनको ॥"

# कवि भानु संग

—हरि भक्त पोखरेल

अग्रास्त्र पलाये जस्तौ गरी,
नेपाली अवनीमा उभ्रियेर
सर्वत्र तिरीमिरी भरी
आफू विलीन भएका भानु !
"बाल कृष्ण" गोप गोपिनी देखि
विमुख भएर, तिम्रै चर्तिकाला गर्दै छन्
"सिद्धि" तिम्रै लागि चँवर हाम्किदैछन्
'लक्ष्मी' तिम्रो प्रसाद बाँड्दा बाँड्दै-
स्वयं सखाप भए,
लेखनाथ ! तिम्रो संझनाले विह्वल भएका
'लेखनाथको' अन्तिम धुकधुकी-
"भानु। लाटोलाई बोल्न सिकायौ
अन्धोलाई देख्न सिकायौ"—भन्नेले
मेरो कल्पना अस्तव्यस्त छ—
हे सरस भाव कर्ता !
तिम्रो उपमा न भेटी साहित्य लखतरान छ—
आउ भानु ! एक पटक फेरि
नेपाली ध्वजाको दोश्रो नक्षत्र भएर—
अनेकौं कुमारी सीताहरूलाई

कैयौं जोगीले छलेर लगेको लगै भो—
यो जंगलबाट—
अनेका रावण-अवतारले
सत्य-तथ्य गुमी सक्यो—यो 'मंगल' बाट
एक पटक फेरि आउन भानु
नेपाली फूलबारीमा
आज फेरि एउटा माली
घाँस काटी रहेको छ—
हज्जारौं प्रेरणा लिएर
एउटा अर्को आश्चर्यित ग्रन्थ लेख
खहरे देखि लिएर—
मूक महासागरले
आफ्नू जिन्दगी तिमीमा दाँजी दिएकाछन्
आउ चिरंजीवी भएर
तिम्रो अभावले आमा सिकिस्त छिन्
तिम्रो बिछोहमा बाबु हुरुक्क छन्
चोखो-चोखो चञ्चले चिन्तनोल
चर्किएको मुटुबाट
अविरल चूहिएको रक्त
अँजुलीमा रातो रातो सगुन ली
चुलुम्मिदै संझना शरमा
मेरो नेपाल आफ्नू श्रद्धा हुत्यांउदैछ तिमिनिर
हे साहित्य अम्बरका धवल बृहस्पती !
एकताको अर्थ 'एक्लो' भएको छ-यहाँ
ब्रह्मचारी कामुक भएको छ यहाँ
हे आचार्य

सोहर बर्षीय युवा कल्पना
सत्तरी बर्षको बूढोको
चाउरिएको गालाझैं
खुम्चिएको छ यहाँ—
नेपाल र नेपालीले मात्र होइन
साहित्य, प्रकृति अनि
यहाँका जीव-विहीन जिन्दगीहरू समेतले
तिम्रो करुण आह्वान गरेका छन्
हे साहित्य रथका सारथी !
नेपाली अम्बरको
आह्लाद-कारक शशी भएर
संसारकै आँखामा आभा पोखी द्यौ भानु !
नेपालको अस्तित्वले अनि
प्रत्येक नेपालीको व्यक्तित्वले
तिमीलाई हाकी-हाकी गरी बोलाएको छ ।

—जनकपरघाम

"मेरा इनार नत सत्तल पाटि क्यै छन्,
जे धन र चीजहरू छन् घर भित्र नै छन् ।
त्यस् घाँसिले कसरी आज दिएछ अर्ति,
धिक्कार हो मकन वस्नु न राखि कीर्ति ॥"

— भानु

# भानुभक्त प्रति

—काली प्र० शर्मा
ज० चु० का० (प्रा० ) लि०
जनकपुरधाम

हे भानु भक्त
हे भानुभक्त
आजको दिन
तिम्रो जन्म दिन अरे
हामीहरू भेला भएका छौं
तिम्रो संझनामा
तिम्रो जन्मोत्सव मनाउन !
नेपालको इतिहासमा
नेपालीको मानसमा
कोरिएका छौ तिमी
नेपालका विभूतिहरू मध्ये
एक छौ, अत.
हामीले तिम्रो प्रशंसा गर्नु पर्छ
तिम्रो जन्मोत्सव मनाउनु पर्छ
तसर्थ हामी भेला भएका छौं
तिम्रो जन्मोत्सव मनाउन !
तिम्रो कृतिले नेपाली जनलाई
एक तुल्यायो
एक बनायो मलाई थाहा छ
थाहा छैन मात्र
तिम्रो कृतिलाई कतिले
मनन गर्दछन्
पहिल्याउद छन्
तिमीलाई हृदय देखि
संझन् छन्
तर भेला हुन्छन अवश्य नै
एक ठाऊमा तिम्रो
जन्मोत्सव मनाउन

म आजको युगमा
मानिसको नाऊको
मात्र एक व्यंगभई
उभिएको छु तिम्रो बारे
केही सुन्न केही भन्न
मानिस कहलाउदै
तिम्रो जन्मोत्सव मनाउन
आज जब कि
अध्यात्म माथि
भौतिकको विजय
निश्चित भईसकेको छ
आज जब कि हाम्रो संस्कृतीलाई
पश्चिमको संस्कृतिले
निल्न थालेको छ
तिम्रो आध्यात्मिक परंपराको
मूल्य थाहा नपाई पनि
म सम्मिलित छु
तिम्रो जन्मोत्सव मनाउन !
यदि मृत्यु पछि पनि
आत्माको लागी कुनै स्थान
छ भने हे भानुभक्त !
तिमी त्यहाँ छौ भने
न हाँसे मेरो प्रलापमाथि
न हाँसे मेरो अभिनय माथि
तिमीलाई न चिन्हे तापनि
तिमीलाई न जाने तापनि
आज उभिएको छु
तिम्रो जन्मोत्सव सफल तुल्याउन !

# रामकाव्य परम्परामा भानुभक्तीय रामायण

—ध्रुव लाल राज

सिरहा

लौकिकतादेखि विमुख भएर जब कुनै अज्ञात रहस्यमय अलौकिक शक्ति प्रति राग, उत्सुकता, विस्मय, जिज्ञासा, लालसा एवं मिलनको अनुभवलाई व्यक्त गरिन्छ अनि त्यस अनुभव-वेद्य अवस्थालाई रहस्यानुभूति अवस्था भन्दछन् अर्को शब्दमा यसलाई दिव्यानुभूति पनि भन्दछन्। किनभने यस्को सम्बन्ध अलौकिक शक्तिसंग हुन्छ। यसैलाई अंग्रेजीमा मिस्टीक फिलिङ्ग भन्दछन्। केही भारतीय आलोच्चकहरूले यसलाई रवीन्द्रको माध्यमद्वारा ल्याइएको यूरोपियन प्रभाव भनी भन्दछन् तर रहस्यमय दार्शनिक भक्ति वैदिक काल देखि नै सूक्ष्म रूपमा विद्यमान छ।

भक्ति नै यज्ञ प्रधान ब्राह्मण धर्मको बिभाजन रेखा थियो। भक्तिको सुनौलो बिहान भागवत धर्ममा सल्बलाएर टड्कारो भयो। यसैको संरक्षणमा भक्तिमार्गले पल्लवित र प्रस्फुटित हुने क्षमता राख्न सक्यो। फलतः ब्राह्मण र भागवत धर्मको समन्वयमा बैष्णव धर्म हुर्कियो र राम प्रति हाम्रो सद् भावना झन् झन् बढ्दै गयो नारायणको रूपमा त्यसो त वैदिक युगमा विशुद्ध रहस्यवादी साधना प्रमुख हुन सकेन न त ऋग्वेदमा नै यसको संकेत प्रचुर मात्रामा पाइन्छ तापनि तप, ऋत र पुरूष जस्ता बीज अवश्य नै फेला पर्छन्। जे होस तर उपनिषद भने रहस्यवादको हृदय हो। उपनिषदहरू त्यो हिमालय हो जसबाट वेदान्तका विविध गंगाका धाराहरू प्रवाहित हुन्छन् उपनिषदहरूमा नै परम तत्त्व र व्यष्टिका बास्तविक रूपसाथि छलफल गरिएकाछन्। त्यो परम तत्व एक र अद्वितीय, शान्त र अनन्त, सत्-चित्-आनन्द, अलक्षण र निर्विकार समस्त जगतका अधिष्ठान ब्रह्म हो। यसैले ऋषि श्वेतकेतुले 'तत्वमसि' (त्यो तिमी नै हौ) भने जस्तै हाम्रा कविवर भानुभक्त पनि रामायणमा अवतारवादको संगसंगै अद्वैतवादको समर्थनमा हस्ताक्षर गर्न पुगेका छन्, व्याख्यामा सघाउ पुर्‍याएका छन् यी भन्दै—

जो हो तत्वमसी छ वाक्य यसको वाक्यार्थ जानी लिनू।
यस्मा तीन् पद छन् ति तीन पदका तात्पर्यमा मन् दिनू॥
तत्का अर्थ परात्म हुन् ति पदमा त्वं भन्नु जीवात्म हो।
इन्को ऐक्य बुझाउन्याँ असि छ पद् रात् दिन् विचार् गर्नु यो॥

अहिले सम्मको अनुसन्धान जे जति हुन सकेको छ त्यसमा बाल्मीकीय रामायणलाई नै प्राचीनतम उपलब्ध रामायण भनिएको छ। यसको रचना चौथो शताब्दी ई० पूर्वको उत्तरार्द्ध तिर भएको अनुमान हुन्छ तर आलोचकहरूको भनाई अनुसार यिनी भन्दा अनेकौं शताब्दी पूर्व देखिनैं राम कथाका अनेकौं आख्यान काव्यहरूको रचना भएको हुनु पर्दछ। पहिले एकले अर्कोलाई भन्ने तथा सुन्ने चलन भएको हुनाले बाल्मीकीय रामायणको मूल रूप पनि स्थिर रहन सकेन। फलतः मूल कथामा केही परिवर्तन र परिवर्द्धन पनि भयो। प्रचलित बाल्मीकीय रामायणका तीन विभिन्न पाठहरू पाइन्छन् दाक्षिणात्य पाठ, गौडीय पाठ तथा पश्चिमोत्तरीय पाठ। धेरै शताब्दी पछि परम्पराको आधारमा लिपिवद्ध गरिएको हुनाले धेरैनैं फरक पाइन्छ। त्यसो त तुलनात्मक अध्ययन गर्दा गौडीय र पश्चिमोत्तरमा धेरै नै समानता पाइन्छ तर अध्ययन गर्दै जाँदा पहिलो शताब्दी ई० देखि भिन्न हुंदै गएको बुझिन्छ–उदीच्य र दाक्षिणात्य। तीनै पाठहरूमा आधिकारिक कथावस्तुमा कुनै उतिको विभिन्नता पाईंदैन (दे०–बाल्मीकीय रामायणका तीन पाठ–नागरी प्रचारिणी पत्रिका वर्ष-५८ अंक-१-२ पृष्ठ १-३५)

रामको कालिगढीमा नै बाल्मीकिको प्रतिभा केन्द्रित छ, चित्ताकर्षक तथा मर्मस्पर्शी रूप प्रदान गर्नमा यिनको सौन्दर्य निहित छ। यसैले अहिले सम्म राम कथाको काव्य धारा बग्दै आइ रहेको आफ्नै पूर्ण व्यक्तित्वमा छ। त्यति मात्र होइन विदेशमा पनि यिनी धेरै सान्निध्य छन् अरूको दाँजोमा।

बौद्धहरूले रामलाई बोधिसत्व मानेर राम काव्यलाई आफ्नो जातकमा स्थान दिएका छन्। यसैले दशरथ जातक, अनामकं जातकम् तथा दशरथ कथानकम् जस्ता तीन जातक उत्पन्न भएका छन्।

जैनहरूले पनि बौद्धहरू जस्तै पउम चरिय (प्राकृत) लेखेर राम काव्यको सृष्टि गरेका छन् जुन अहिले संस्कृतमा 'पद्म चरित्र'को नाउँले प्रसिद्ध छ। जैन राग

कथाको एउटा अर्को रूप गुणभद्रकृत उत्तर पुराणमा पाइन्छ। यसैको पृष्ठिभूमिमा संस्कृत, प्राकृत तथा कन्नड आदिमा ग्रन्थहरूको रचना भएको छ।

संस्कृत ललित साहित्यको स्वर्ण युगमा धेरै कविहरुले राम काव्यको सृष्टि गरे। राम कथा सम्बन्धी प्राचीनतम महाकाव्यहरूमा बाल्मीकीय कथानकलाई नै आफ्ना आधार बनाएका छन्। तर ती महाकाव्यहरूमा भने शृंगार रस कै बाहुल्य पाइन्छ। सेतुबन्ध तथा भट्टिकाव्यमा भने राक्षसहरूको शृंगार—चेष्टा सम्म मात्र सीमित गरिएको छ। 'जानकी हरण'मा राम सीताको सम्भोग वर्णन कुमार संभवबाट अनुकरण गरिएको छ। कालिदास कृत 'रघुवंश'मा रामका साथ साथै अरू राजाहरूको चरित्र पनि वर्णन गरिएको छ ता पनि रामनै महाकाव्यका प्रधान नायक मानिन्छन्। कथनाक उही भएता पनि आफ्नो मौलिक प्रतिभाद्वारा बाल्मीकि भन्दा छुट्टिन्छन्। राम अयोध्या फर्कने वेलामा सीतालाई पुष्पक विमानमा बसाएर वनवासका ठाउँहरू देखाउँदै अतीतका दुर्भाग्यावस्थाहरूलाई स्मरण गराउँदै कथा वस्तुलाई मर्मस्पर्शी करूण रसले बगाएका छन्। 'रावणवध' नै भर्ट्टकाव्यको नाउँले प्रसिद्ध छ। 'जानकोहरण'मा बालकाण्ड देखि युद्धकाण्ड सम्म वर्णन गरिएको छ। कुमारदासले कालिदासको शैलीलाई अनुकरण गरेका छन्। यसमा शृंगारात्मकताको प्रबलता छ। अभिनन्दनकृत रामचरित' ३-६ सर्गहरूमा छन्। क्षेमेन्द्रकृत रामायण-मंजरी ५३८६ शिलोकहरूमा पश्चिमो-त्तरीय रामायण पाठको आधारमा लेखिएको छ। साकल्यमल्लकृत 'उदार राघव' १८ सर्ग मध्ये ९ सर्ग नै सुरक्षित छ। चौधौं शताब्दीमा पनि धेरै रामायणहरू लेखिए तर ती अप्रकाशित छन्।

त्यस्तै नाटकहरूमा पनि भासकृत 'प्रतिमा र अभिषेक' पाइन्छन्। भवभूतिको 'उत्तररामचरित'। राजशेखरको' 'बालरामायण'। यसैगरी वंगला साहित्यमा पनि राम नाटक तथा रामायणहरू प्रशस्त छन्। द्रविड, तेलगु मलयालम, कन्नड असमिया, गुजराती, मराठी, उडिया, काश्मीरी आदि भाषाहरूमा पनि प्रशस्त रामायणहरू छन्!

आनन्दरामायण, अध्यात्मरामायण, अद्भुतरामायण तथा भुशुण्डीरामायण हरू मध्ये अध्यात्म रामायण नै विशेष महत्व राख्छ। यही कृष्ण द्वैपायनकृत

अध्यात्मरामायणको आधारमा हाम्रा आदिकवि भानुभक्तले आफ्नो रामायण प्रस्तुत गरेका छन्। कसै कसैले अध्यात्मरामायण कुनै अज्ञात दार्शनिक कविद्वारा लेखिएको छ भनी भनेकाछन् ती हाम्रो विवेच्य वस्तु न भएको हुनाले उतापट्टि अलमलिनु हुँदैन।

रामकथालाई संभवतः एशियाका समस्त देश, तथा भारतीय भाषाका समस्त लेखकहरूले आ-आफ्नै किसिमले प्रस्तुत गरेकाछन् यसैले संसारभरिमा रामायणको एउटै रूप दृष्टिगोचर हुन्न। फलतः विचारमा मतमतान्तर हुनु उतिको अस्वाभाविक देखिन्न। जे होस् तर विदेशमा पनि भारतीय रामायणले नै आफ्नो प्रभाव क्षेत्र ओगटेको छ। सर्वप्रथम बौद्धहरूले नै रामकथाको प्रचार र प्रसार गरेको बुझिन्छ किन भने चीनियाँ भाषामा 'अनामकं जातकम्' तथा 'दशरथ कथानकम्' क्रमशः तेश्रो र पाँचौं शताब्दी ई० मा अनुवाद गरिएको थियो। यस पछिको प्राचीनतम विदेशी रामकाव्य तिब्बती रामायण हो जसको रचना आठौं शताब्दीमा गरिएको अनुमान हुन्छ। पूर्वी तुर्किस्तानको 'खोतानी रामायण' नवौं शताब्दी ई० को बुझिन्छ। यी दुवैमा पर्याप्त मात्रामा समानता पाइए तापनि यिनको सम्बन्ध वृहत्कथा तथा गुण भद्रकृत 'उत्तरपुराण' देखि असन्दिग्ध जस्तै छ।

हिन्देशिया तथा हिन्दचीनमा 'वाल्मीकीय रामायण' प्राचीन काल देखि नै प्राप्त छ तर दुर्भाग्यको कुरा के छ भने त्यस नाकाका कुनै पनि साहित्य सुरक्षित रहन पाएनन्। अचेल हिन्दशियामा रामकथाका दुई रूप पाइन्छन्—जावाको दशौं शताब्दी ई० को ककविनको रामायण जस्को प्रधान आधार भट्टिकाव्य छ, दोश्रो अर्वाचीन 'हिकायत सेरी राम (पन्ध्रौं श० ई०) को रूप। यसै आधारमा अहिले सम्म रामकाव्यको सृष्टि तथा राम नाटकहरूको अभिनय गरिन्छ जुन औधि नै लोकप्रिय छ। त्यसो त 'हिकायत सेरी राम'को कथानक बाल्मीकीय रामायण देखि धेरै नै फरक छ तापनि आधिकारिक कथावस्तुमा भने दुवै उस्तै उस्तै मिल्न आउँछन्। हिन्दचीन, श्याम तथा ब्रह्म देशमा प्रचलित रामकथा मुख्य रूपमा 'सेरी राम' मा नै आधारित छन्। कम्बोडियाको 'रामकेर्ति' (सोह्रौं श० ई०) तथा श्यामको 'रामकियेन' ( सोह्रौं श० ई० ) मा धेरै नै समानता पाइन्छ। दुवैमा 'वाल्मीकीय रमायण' तथा 'सेरीराम'को समन्वय गर्ने प्रयास गरिएको छ। ब्रह्म-

देशको रामकाव्य अपेक्षाकृत अर्वाचीन छ । राम नाटकहरूको अभिनय त्यहाँ अठाह्रौं शताब्दी ई० को उत्तरार्द्ध तिर श्यामबाट ल्याइएका कैदीहरूद्वारा प्रारम्भ गरिएको थियो । १८०० ई० मा यूताले राम गायनको रचना गरेका थिए, जुन ब्रह्मदेशको सब भन्दा महत्वपूर्ण काव्यग्रन्थ भनिन्छ ।

रामायणका कथा शायद उति नै पुरातन र नूतन छ जति मानवको सभ्यता। अनन्तकाल देखि यो सधैं नव-नूतन हुँदै आएको छ । यो पावन अवधेश राजकुमार दशरथ पुत्र कहिले कालिदासको लेखनी जनित रघुवंश द्वारा झंकृत भएका छन् भने कहिले वाल्मीकिको वाणी 'रामायण' द्वारा आलोकित र विलासित कहिले तुलसीको रामचरित द्वारा नाचेका छन् आफ्नै अनुभूतिमा र चन्दाझाका रामायण द्वारा सबैभन्दा प्यारो शशुराली घरमा मैथिली सित रमाएका छन् । यसै कथालाई हाम्रा महाकवि भानुभक्तले नेपाली माटामा अवतरित गराएर एक चोटि फेरि नेपाली साहित्याकाशमा पूर्व स्मृति रुपी वाणीको बाँसुरी वजाएका छन् र अवधपुरीमा चहारेर मानिसमा कहिले नवोदित आशाको संचार गर्छन् भने कहिले वनमा चहार्न लगाउँछन्, कहिले राम वन जाने वेलामा रूवाउँछन् । त्यति मात्रै कहाँ हो र ? भक्तिरूपी कहिले न रित्तने प्यालामा चरित्र रूपी अमृतको रसास्वादन गराउँदै आत्मविभोर समेत पार्छन् । कथारूपी अभिसारिकाको हाड र छाला एकै भए ता पनि त्यसमा किन्चित परिवर्तन र परिवर्द्धन गर्दै कथालाई आफ्नै नेपालीपन मासु र रगतले परिपुष्ट पारेर नेपाली अनुर्वर माटोमा दगुराएका छन् मञ्जुल सामञ्जस्यले । यसले कता-कता देवकोटाले गरेका टिप्पणीको संझना हुन्छ—नेपाली सभ्यतालाई रामायणका जराहरूवाट नयाँ टुसा हाल्नु थियो । नेपाली वारीमा एक सानो कल्पद्रुम रोपियो जहाँ हाम्रा सर्वोच्च भावनाहरू र कल्पनाहरू हामी फुलेका र फलेका पाउँछौं । निश्चय नै भानु कल्पद्रुम थिए हाम्रा अनुर्वर बगैंचाका निम्ति । आफ्नै भावभूमि र भावगर्भीय छ 'उत्तर रामचरित'का भवभूति अथवा 'मेघनाद वध' का माइकेल मधुसूदन झैं ।

इरानमा फिरदौसीको 'शाहनामा' गाइए झैं हाम्रो मुलुकमा भानुभक्तको रामायण पनि पाठ गरिन्छ । विद्वान् देखि लिएर अनपढ समेतले भानुभक्तका श्लोकहरूलाई मन्त्रमुग्ध भएर पाठ गर्छन् श्रद्धाले टाउको निहुराउँछन् । तर हामी

वैदिक परम्परामा हुर्केको हुनाले नैतिक र धार्मिक सत्वको कमी पाउँछौं फिरदौसीको काव्यमा । शाहनामा एउटा विश्वको रमणीय काव्य भएता पनि कविको मूल उद्देश्य कुनै लोक मर्यादा स्थापना गर्नु थिएन । उनी केवल लोकरंजन कवि मात्र थिए । तर हाम्रा भानुभक्त भने लोक मर्यादा स्थापना गर्ने दृढ प्रतिज्ञ देखिन्छन् लोक-रंजन कवि हुँदा हुँदै पनि । किनभने उनको कविताको प्रथम प्रस्फुटन नै 'लोकको गरूं हित् भनी' देखि मुखरित भएको छ । यसैले भानुभक्तका धरातलमा उब्जेका राम तत्काल प्रकट हुने र तत्काल अन्तरधान हुने चटकी राम होइनन् । उनका राम त लौकिक धरातल देखि उठेका लौकिक जीवनमा प्रवेश गरेका राम हुन् । भानु विषयानुरागी कवि न भएर तपस्यानुरागी प्रेरक कवि थिए । यसैले भानुको रामायण नेपालीकोलागि एउटा अभिराम हो । अर्को शब्द भन्ने हो भने भक्तिको निकेतन पनि । ग्रियर्सनले यहाँको भक्तिलाई मुक्तकण्ठले प्रशंसा गर्दै यी उद्गार व्यक्त गरेका छन — हामी आफूलाई यस्तो धार्मिक आन्दोलन सामुन्ने पाउँछौं जुन ती समस्त आन्दोलन भन्दा कता कता विशाल छ जसलाई भारतले कहिले प्रत्यांकन गरेको छ; यहाँसम्म कि बौद्ध धर्मको आन्दोलन भन्दा पनि धेरै नै विशाल छ किन-भने यसको प्रभाव अहिले सम्म पनि विद्यमान छ । यस युगमा धर्म ज्ञानको होइन वरू भावावेशको विषय भै सकेको थियो । यहीं देखि हामी रहस्यवाद र प्रेमोल्लासको देशमा विचरण गर्छौं र यस्ता आत्माहरूको साक्षात्कार गर्छौं जुन काशीका दिग्गज पंडितहरूको जाति मात्र होइन परञ्च जसको समता मध्य युगका युरोपियन भक्त वर्नार्ड ऑफ क्लेयर.वाक्स, थामस ए० केम्पिस र सेन्ट थेरेस देखि छ ।

उनी भन्दा पहिले कृष्ण भक्ति रूपी अमृतको वर्षा हुँदा हुँदै पनि भानुभक्तले रामलाई नै रोजे । यसको मुख्य कारण के हो भने कृष्णका उपासकहरूले पराजित भएका नेपालीहरू समक्ष कृष्णको पूर्ण विकसित व्यक्तित्वलाई अवलोकन गरेर प्रस्तुत गर्न सकेनन् । यिनीहरूले शोकाकुल अर्जुन जस्तै भएको नेपालीहरू समक्ष कृष्ण भएर कर्त्तव्यको उद्‌बोधन द्वारा उचाल्न सक्ने क्षमता दिन सकेनन् । केवल —

"आइ नाथ शरणागत तेरी. हूँ गि मै जनम जन्मकि चेरी"

जस्ता वासनामूलक, हीनतामूलक, पराजयजनित रूञ्चे स्वर अलाप्न थाले ।

हुन त यदुनाथ पोख्रेलले —

"फिरङ्गी हटाई लुटीपीटि चाँडो
पुगी आज गंगा पखाल्नु छ खाँडो"

भनेर खाँडो जगाउने भरमग्दूर कोशिश गरे तापनि कृष्णको सर्वतोमुखी प्रतिभालाई जनमानसमा भिजाउन सकेनन्। यसैले विशाल कथानक र उदात्त चरित्रलाई एकै चोटि अंगालेर रामको प्रभावकारी व्यक्तित्वलाई भानुभक्तले प्रस्तुत गरे। जसरी सय वर्ष सम्म फ्रान्ससित लडेर थाकेका इङ्गलैण्ड चसरको क्यान्टरबरी टेलमा पुगेर आनन्दसाथ मुस्कुराएका थिए त्यसरी नै भयानक मार-काट पछि आफ्नै आंगनमा बिसाएर नेपालीका ओठमा भानुभक्त पुगी बिहानको स्मरणीय मिहिन रेखा टुसाएको देखे। (भानुभक्त र उनको युग-बालचन्द्र शर्मा)। जसमा केही लोक-मर्यादा थिय. र थियो केही सन्देश पनि। त्यो सन्देश अवतारवादी थियो। जसरी गीतामा—

यदा यदा हि धर्मस्य ग्लानि र्भवति भारत।
अभ्युत्थानम धर्मस्य तदात्मानं सृजाम्यहम् ॥
परित्राणाय साधूनां विनाशाय च दुष्कृताम्।
धर्म-संस्थापनार्थाय संभवामि युगे युगे ॥

यसैले अरू रामायणकारहरूले जस्तै भानुभक्तले पनि रामलाई अवतारवादको पृष्ठभूमिमा उतारेर त्यसमा एउटा विशेषता थपि दिएका छन् यो भन्दै—

भूभार हर्नाकन जन्म लीयौ,
यो रूप भजन् गर्न बनाइ दीयौ।

यस अर्थमा भने भानुभक्तलाई इटलीको दाँते भन्न सक्छौं ईश्वरत्वको समर्थनमा।

रामायणमा भक्तिलाई नै विशेष महत्व दिइएको छ। नारदले भक्तिलाई परम प्रेमरूपा र अमृत स्वरूपा हो, जसलाई प्राप्त गरेर मानिस सिद्ध, अमर र तृप्त हुन्छन् भनी भनेका छन्। त्यस्तै व्यासले पनि अनुराग र गर्ग कथादिहरूमा अनुरक्तिलाई नै भक्ति भनेका छन्। तर त्यो अनुरक्ति ईश्वर प्रति नै समर्पित हुनुपर्दछ। महर्षि शण्डिल्य प्रणीतले "भक्तिः परानुरक्तिरीश्वरे" भनेर भनेका छन्। यसको अतिरिक्त अरू के हुन सक्छ र? भक्तिको निम्ति जहां एकातिर अनुरागको आव-

श्यकता छ त्यहाँ अर्कोतिर त्यो अनुराग ईश्वर प्रति नै समर्पित हुनु पर्दछ अर्थात ईश्वर प्रति अनुराग हुनु नै भक्ति हो। यस आधारले चाहे त्यो पुरुष होस वा स्त्री, उच्च-कुलको होस वा नीच कुलको होस भक्ति मार्गमा कुनै भेद छैन। उसलाई ईश्वरको दिग्दर्शन हुन्छ अवश्य नै। भानुले आफ्ना काव्यात्मक अभिव्यक्तिमा रामशक्तिको महिमा गाएका छन्, एउटा भव्य प्रासाद खडा गरेका छन्। त्यो भव्य महल बालुवामा बनाइएको छैन, बरू खडा गरिएको छ मानिसको हृदयपटलमा जुन सतत रूपले अन्तःचेतनामा सल्बलाएको छ गौरवान्वित भएर, क्रीडास्थलको अगाध राशिमा पौडी खेलेर लोकधर्म बनाए जस्तै। भानुको रामायण प्रधानतया दास्यभाव न भएर मधुरोपासनाको प्रदक्षिणा हो। यिनको राम अवतारी राम र सीता हुँदा हुँदै पनि अवधपुरीको अट्टालिकामा गुञ्जायमान भएर पल्लवित भएका छैनन् बरू चुँदि वेंसी रमधाको पाखा तथा डाँडा काँडामा हुर्किएका ग्रामीण नेपाली राम र सीता थिए।

उनले आफ्नो रामायणमा शब्द लालित्यलाई भरेर केही पनि बगाएका छैनन्। बरू, आफ्ना सरस तथा सरल शैलीमा काव्य मन्दाकिनी बगाएका छन्, यसैले उनको काव्य सौन्दर्य महिमा मण्डित छ तथा नेपाली भाषाको मुकुटमणि पनि।

रामायणमा यत्र-तत्र जीवन किन ? भन्ने हृदयको चिरन्तन प्रश्नले भानुभक्तलाई निकै सताएको देखिन्छ आत्मा र जीव के हो भन्ने कुरामा निकै घोरिएका देखिन्छन्, स्वार्थ त्यागमा औधि नै रमाएका छन्, पितृ आज्ञापालनमा निकै गौरवान्वित भएका छन्, मित्रतामा जीवन सम्म आहुति दिने वचनबद्ध भएका छन् क्रोधलाई दमन गर्न घमाइलो शिशिरका दिन बोकेर ल्याएका छन्, दानवतालाई मानवतामा बदलने अथक प्रयास गरेका छन् स्त्री, सभ्यता, संस्कृति आचार-व्यवहारका कुशल प्रयोक्ता बुझिन्छन्।

तुलसीले (श्रद्धा विश्वासरूपिणौ) तथा टी॰ एस॰ इलियटले—

ईश्वर को हो जान्दिन म
किन्तु हो उ हाम्रो श्रद्धा नै"

भने जस्तै हाम्रा भानु श्रद्धा, विश्वास र आस्थामा विश्वास गर्दैनन् बरु विश्वास गर्छन्—

जगन्नाथ् साक्षात् हुन् त्रिभुवनपतीका अधिपती।

हाम्रा भानुले रामायणलाई बाल्मीकि झैं बिलासको क्रीडास्थल, तुलसी झैं पाण्डित्यपूर्ण उपदेशलाई कहीं पनि आश्रय दिएका छैनन् बरु सुकुमार, सुकोमल सरल तथा सरल भाषामा सबैले बुझ्ने गरी सल्‌ल बगाएका छन् मृदुभाषी बनेर। फेरि जहाँ जहाँ जुन जुन कुराको वर्णन गरिएको छ त्यहाँ त्यहाँ कहीं पनि शब्द-जाल को प्रयोगमा गरेका छैनन्। कल्पनामा कहीं पनि चुलुर्म्म भएर डुबेका छैनन्। केवल प्रतीक विधान र संवेदनाद्वारा त्यस दृश्यको अवलोकन गरेर औंल्याएका मात्र छन्। त्यहाँ अतिशयोक्ति र शंका उठाउने ठाउँनै छैन बरु त्यसको सट्टामा हामी त्यसलाई औचित्य भन्न सक्छौं। जुन सुकै कुरालाई पनि छोटकरीमा वर्णन गर्नै वहाँको आफ्नो निजी विशेषता हो। अध्यात्मरामायणको अनुवाद भएता पनि पढ्‌दा खेरि अनुवाद जस्तो पटक्कै लाग्दैन। आफ्नै मौलिकता हो कि जस्तो आभास दिन्छ। त्यसमा पूर्ण नेपालीपन झल्केको स्पष्टै पाउँछौं जस्तै—

गयो खान्या वेला मकन त मिल्यो राज्य वनको।
भरत्‌ले राज् पाया यहिं वसि गरून् राज्य जनको॥

उनका राम र सीता शहरिया वातावरण देखि धेरै टाढा छन्। यसैले सीतालाई-

भोकी मैलि निन्याउरी न त कपाल कोर्‍याकि सब् केश उसै।
लट्टा मात्र गर्‍याकि खालि भुमिमा रूँदै वस्याकी यसै॥

अर्को विशेषता के छ भने तुलसीदासले लंकाकाण्ड लेखेकोमा हाम्रा वरेण्य कविवर भानुले लंकाकाण्ड न भनि युद्धकाण्ड शीर्षक दिएका छन्।

हाम्रा भानुभक्तले कथावस्तुमा केही नयाँ परिवर्त्तन ल्याएता पनि चरित्र-चित्रणमा कुनै किसिमको आघात पुर्‍याएका छैनन्। यसैले एउटा निष्णात आचार्य जब सचेत रूपले एक शिल्प महोत्सवको आयोजना गर्न कम्मर कस्छ "आदर्श राघव"को रचना हुन्छ भने एउटा सुषुप्तावस्थाका किशोर जब पाटीमा गई थकाई मारि घाँसीको कुराले विह्वल र अल्हादित हुन्छ भानुभक्तीय रामायणको पदार्पण हुन्छ।

भानुभक्तीय रामायणलाई राष्ट्रिय काव्यको रूपमा पनि गणना गर्न सकिन्छ। किन भने राष्ट्रिय कविता त्यही हुन सक्छ जसमा समस्त देशलाई एउटा इकाइ

मानेर काव्य सृजना गरिएको होस् । त्यति वेला पृथ्वी नारायणको एउटा नयाँ परि-कल्पना भरखरै साकार भएको थियो । पृथ्वीले यो मेरो चार जात छत्तीस वर्णको फुलवारी हो भनेर उदारनीति अपनाए ता पनि त्यसम्म भएको फाटोमा भाषात्मक एक-ताको अझै अभाव थियो । सबै एक अर्का प्रति रिस-राग फेर्ने मौका पर्खदै थिए, तर त्यसै वेला उषाकालीन चित्रकार रूपी द्वार जस्तै भानु टुप्लुक्क नेपाली गगन मण्डलमा देखा परेर आफ्ना प्रचण्ड तेजले रामायण जस्तो महाकाव्य लेखी समस्त नेपालीलाई प्रज्वलित पारे, एक सूत्रमा बाँधे । जसमा आवेश कति पनि थिएन बरू थियो स्थायी ताप यसैले होमरका 'इलियड र अडेसी' दाँतेका 'डिवाइन कौमेडी' गेटेको 'फाउस्ट' मिल्टनका "पैराडाइज लॉस्ट, बाल्मीकिको रामायण, व्यासको महाभारत आदि काव्यहरू राष्ट्रिय काव्य भए झैं भानुभक्तको रामायणलाई पनि राष्ट्रिय काव्य भन्न सकिन्छ ।

अन्त्यमा रामकथामा मानिषको हृदयलाई द्रवीभूत गरेर साधारणीकरण गरि दिने जुन शक्ति छ त्यो अन्य कथामा पाउनु दुर्लभ नै छ । यसैले होला प्रसन्न राघ-वको प्रस्तावनामा सूत्रधार मित "सबै कविहरूले रामचरित्रको फेरि-फेरि वर्णन किन गर्छन्" भनेर सोधिएको एक प्रश्नमा सूत्रधारले यो कविहरूको दोष होइन गुणको दोष हो भनी उत्तर दिन्छन् । यसैले यसमा कविको दोष होस् अथवा न होस् यसको मुख्य कारण बाल्मीकिको अजस्र प्रतिभाको प्रभाव हो जसलाई कहिले पनि बिर्सन सकिन्न । हामी फेरि-फेरि पनि रामकथा सुन्न यसरी नै लालायित रहि रहने छौं, यही हाम्रो धोको छ जुन अवश्य नै एक दिन पूर्ण होला । अस्तु

> "क्रोधै हो यमराज सर्व जनको वैतर्नि भन्नु पनि
> तृष्णा हो भनि यो बुझेर तिमिले कैल्हैन विर्स्या पनी
> सन्तोष्लाइ बुझि काम-धेनु सरिको सन्तोष् मनूले रहू
> रिस् गर्नु बढ़िया त छैन वनमा जानू असल् हो सहू"
>
> —भानु रामायण

# तिम्रो खोजीमा

—मध्यम कान्त शर्मा

तिमी अवश्य यहीं कहीं लुकेछौ
शायद हामीलाई बिलौना दिन,
तिमी एउटा सांचैको भानु हौ
साथै भक्ति बलियो
हृदय चम्किलो
नेपालीका अति प्यारा !
भानु ! आउ देउ शान्ति
तिमी बिना हाम्रो कलम थामी रहेकोछ
शायद यो तिमीलाई थाहा छैन होला
मलाई पनि लाग्यो
कि तिम्रो मधुर स्वर
यहीं कहीं गुँजिरहेको जस्तो लाग्छ,
तिम्रो नाम लिई संधैं पुकारि रहेका छौं
भानु ! भानु !
तिम्रो जस्तो भक्त
तिम्रै जस्तै शुद्ध
हामीलाई पनि बांडी देउ
एक पल्ट फेरि पनि आइ देउ
आंसु बहाई बहाई तिमीलाई नै संझीरहेछौं
हृदय हाम्रो घोर अन्धकारमा परीरहेकोछ
बुझिदेउ, आशीर्वाद देउ

भानु ! भानु ! कहां छौ ?
शक्ति समेत हाम्रो हीन भईरहेको छ
हामीलाई छाडी कहां अलिपएको
एक पल्ट आई देउ
बच्चाहरूलाई देउ शक्ति र बुद्धि
हामी तिम्रै खोजीमा छौं
हावा, पानी र अन्धकारमा दौडी रहेछौं
हाम्रो पुकार सुनि देउ
कहां छौं ?
भानु ! भानु !
भानु ! के सांचैनै हामी बालकलाई बिर्सेको ?
यो अशान्तिले खलबलिएको हृदयमा
सान्त्वना न दिने ?
भानु ! शब्दले मात्र हामीलाई शान्ति पाइएन
साक्षात तिम्रै दर्शनको खोजी गरी रहेछौं
तिमीलाई नभेटी यो आंसु सुक्दैन
यस बुद्धिको विकास हुंदैन
पहिलो खुडकिलो पनि पूरा हुंदैन
भानु ! आउ
देउ सान्त्वना
भानु ! भानु ! भानु !

●●

# कवि भानुभक्त प्रति श्रद्धाञ्जलि

—गंगा प्रसाद शर्मा "दहाल"

कुनै पनि कवि या लेखकको सुषुप्त भावना या अनुभूतिलाई जगाउन, घच्घच्याउन एउटा प्रेरणाको आवश्यकता हुन्छ। विशेष परिस्थिति र बिशेष बातावरणल कविमाको कवित्व फुट्दछ। म कुनै कवि या लेखक होइन। तर भानुभक्तको यस जन्म दिनले मलाई पनि उनी प्रति आफ्नो श्रद्धाञ्जलि अर्पित गर्ने ठूलो प्रेरणा दियो। यो एउटा दीनको श्रद्धान्जलि हो, जस्मा साराका सारा सामग्री भेटाउन गाह्रै पर्ला जे भएपनि एउटा महापुरुष, बिशिष्ट मानिस 'कबि भानुभक्त' भएकोले मेरो यो श्रद्धान्जलि ग्रहण योग्यनै हुनेछ। आजका कुनै नेपाली आदि कवि भानुभक्त देखि अपरिचित छैनन्, तर परम्पराबश मैले पनि उनको जन्म बिक्रम सम्वत १८७१ तनहूँ जिल्लाको रम्घा गाउंमा भएको नलेखी धरै पाइन। उनको शिक्षा-दीक्षा पितामह पण्डित श्रीकृष्ण आचार्य द्वारा भएको थियो। उनले स्कूल, कालेज, युनिवर्सिटी आदिमा पढेका थिएनन्। आखिर प्रतिभाशाली व्यक्तिको लागि यसको कुनै खास महत्व पनि रहँदैन। बिश्वको इतिहास पल्टाउँदा धेरै यस्ता प्रतिभाशाली व्यक्तिहरू पाइन्छन्, जस्लाई कलेज र युनिवर्सिटी धाउनुपरेको देखिंदैन। कबिजीको हृदय भित्र अज्ञात रूपमा भावनाहरू रूमलि रहेका थिए। एक दिन भानुभक्त घुम्न भनी घरवाट निस्के। उनी रिस्ती खोलाको किनारै किनारै गैरहेका थिए। घाम चर्को भएकोले केही बेर आरामको लागि रूखमनि छहारीमा एउटा ठूलो शिलामाथि बसे। थकाइ मार्न उनी निदाए। जागा भएपछि उनले एउटा घाँसीलाई त्यस चर्कीरहेको घाममा तर्र तर्र पसिना चुहाई घाँस काटिरहेको देखे। त्यस घांसीको परिश्रम देखि प्रभावित एवं द्रवित भएर टंटलापुर घाममा घांस काटने प्रयोजन के भनी उनले प्रश्न गरे। घांसीले झट्ट बेहान बेलुकी खाईपीई बाँचेको पैसाले कुवाँ बनाउने विचार आफ्नो कीर्ति नाम, यश राख्ने बिचार व्यक्तगरेको सुन्दा उनी झल्याँस्स बिउँझे यही भो उनको लागि प्रेरणा। यही प्रेरणाले गर्दा आज भानुभक्त स्मरणीय मात्र होइनन्, श्रद्धा र

साहित्य निर्माणको केन्द्र बनेका छन् । उनले यही प्रेरणाबाट नेपाली रामायण लेखन प्रारम्भ गरे ।

कुनै पनि साहित्यिकको मापदण्ड सर्वसाधारण जनतामा परेको प्रभाव हृदय स्पर्शिता, सरलता समाजिकता एवं मौलिकतामा निर्भर गर्दछ । यी सबै गुण हामी भानुभक्तमा पर्याप्त मात्रामा पाउंदछौं । यद्यपि कतिपय विद्वान् उनको रामायणमा व्याकरण, रस, अलंकार, छन्द, रीति आदि खोज्न पछि लाग्दछन् तर मेरो दृष्टिमा यो उनीहरूको भूल हो । रस अलंकारलाई मात्र हामीले साहित्यको संज्ञा दिनु बुद्धिमानी ठहरिंदैन । यसमा कृत्रिमता हुन्छ र यथार्थमाँ मौलिकताको पनि अभाव हुन्छ ।

उनको रामायणमा सबै कुरा मौलिक छन् ; यसमा सरलता छ, हृदय ग्राह्यता छ र छ मौलिकता पनि । उनी शब्द बटादैंनन्, भाव बङ्याउँदैंनन् । यस्मा उनको पाण्डित्य प्रदर्शनी छैन । जो छ, पवित्र हृदयबाट उम्लेर, बगेर आएको प्रवाह । उनी नेपाली पहाड नाघेर कहिल्यै उड्दैंनन् । उनले भाषालाई मानिसको ओठसमेत मैं सीमित नराखी आफ्नो मौलिक छन्दमा सर्वसाधारणको हृदय छुने गरी रामायणको सृजना गरेका छन् । हामीलाई उनले फेरि उही मर्यादा पुरुषोत्तम राम परमप्रिय भाई लक्ष्मण, भरत निष्काम भक्त हनुमानजीकैं पुर्‌याएका छन् । रामायणको प्रत्येक हरफमा हामी अद्वितीय आनन्द र रसको अनुभव गर्न सक्तछौं । यसै भित्र हामी आदर्श, सदाचार, सद्व्यवहार र कर्त्तव्यको पाठ घोक्तछौं । यसै हुनाले रामायणको गुणानुवाद सबै मुक्तकण्ठले गर्दछन् । पहाड, तराई जतातते रामायणको गुणगान हुन्छ ।

रामायणको अतिरिक्त उनको अन्य कृति पनि छन् जस्तै प्रश्नोत्तरी, भक्तमाला बधूशिक्षा, आदि । जे भए पनि उनको प्रमुख ग्रन्थ रामायणनै हो, जस्ले हामीलाई आध्यात्मिक ज्ञानका साथै मानवताको पाठ पढाउंछ । काठमाडौंको बातावरणले कविको हृदयलाई छोयो र उनको अन्तस्तलबाट स्वतः प्रस्फुटित भएर गायो चपला अबलाहरू एक सुरमा ।

गुनकेशरीको फुल ली शिरमा ।

हिंडन्या सखि लीकन ओरिपरि,
अलकापुरि कान्तिपुरी नगरी ।

उनलाई हाम्रो राजधानी कान्तिपुरी अलकापुरी झैं लाग्यो। गुनकेशरीको फूल लाएका नारी अप्सरा झैं। हामी यस हरफमा क्या मजाको क्या मीठो कल्पना, भावना प्रवाहित भएको पाउंदछौं । यस्तै भावना उनकै बालाज्यूमा पनि पाइन्छ । उनको कल्पनाशीलता, भावुकताको ज्वलन्त उदाहरण यिनै पंक्तिहुन ।

उनले रामायणमा गया भय। जसै तसै इत्यादि लेखि तुक या एउटा हरफको सम्बन्ध अर्को संग बताउने जुन प्रयास गरेका छन् त्यो पनि त्यस समयकै देन हो। व्याकरणको अत्तो पत्तो थिएन। बांध बाधिएको छैन भनेर बाढी अडिने होइन। उनले जस्तो विषय बाताबरणमा पनि रामायण पूरा गरे। आखिर उनको आत्मा त जेल भन्दा बाहिरै स्वच्छन्दता पूर्वक बिचरण गरि राखेको थियो। यस्कै फलस्वरूप उनलाई सफलता मिल्यो।

श्रद्धाञ्जलि अर्पित गर्नुको तात्पर्य कसैको सारा जीवन परिचय दिनु होइन। आदि कवि भानुभक्तको बास्तविक परिचय दिनको लागि एउटा महान एवं ठूलो ग्रन्थ तयार पार्नु पर्दछ।

अतः यस श्रद्धान्जलिमा उनको आदर्श, स्वच्छ, पबित्र र उज्वल विचार विशाल भावना र सद्व्यबहार तर्फ प्रेरित भै सतत कर्त्तव्यनिष्ठ भै जीवन पथमा अग्रसर हुने प्रेरणा सिवाय अरू केही पाउन सकेनन्।

जनकपुरधाम

## श्रद्धाञ्जलि

—रमेश चन्द्र देवकोटा

सच्चा साहित्य धारा सुललित गुणका भाव सौन्दर्यकारी
संग्ला साहित्य चेता सुरलय लिपिका लोक कल्याणकारी
नेपालीका सुचेता कविवर अगुवा भानुको आज जन्म
लाखौं लाखौं जयन्ति स्मृति गरि कृतिकै मान्दछौं वर्ष-वर्ष।

# भानुभक्त

स्थिरबृहदवदानं धीर-सम्प्राप्त-मानं
विमल-सुमति-भानं ख्यात-रामीयगानम् ।
स्वविषय-नृप-रक्तं काव्य-निर्माणसक्तं
पशुपति-वरभक्तं तं नुमो भानुभक्तम् ॥

(जीवनाथझा)

× × ×

नेपाल रही नै रहने छ—
नेपाली रहेसम्म
नेपाल कसैले बनाओस्
नेपाली तिमीले बनायौ
साहित्य बनी नै रहने छ—
भाषा रहेसम्म
साहित्य कसैले बनाओस्
भाषा तिमीले बनायौ

—जगदीश घिमिरे
जनकपुरधाम

हामी भानुभक्त पढेर शिक्षा शुरू गर्दछौं र उनलाई हेला गरेर समाप्त गर्ने गर्दछौं, तर बुझ्नेहरू आफ्नो घरको बत्तीमा अर्कै मोहनी देख्तछन् ।

उनको भविष्यलाई सन्देश यही छ:—सत्यको श्रद्धा र नेपाली हृदयको समीपवर्तित्व नै कविको पहिलो पानी हो ।

—लक्ष्मी प्रसाद देवकोटा

# के भानुभक्त-भक्त हुन् ?

—प्रो० रामप्रसाद भट्टराइ

आदि कवि भानुभक्तमा 'भक्त' उपाधि लागेको पाइन्छ । यो 'भक्त' शब्दले भानुभक्तलाई किन विभूषित पार्नु पर्‍यो यस वियषमा धेरै चर्चा एवं परिचर्चाहरू नगरिएका होइनन् । यसैमा नै मैले पनि कलम चोभन अघि सरेको छु । भानुभक्त प्रति केही लेखी आफ्नो साहित्यिक भारलाई केही हलुका गराउन होला नाट्य सम्राट बालकृष्ण समज्यूले 'आदि कबि' र अन्त्यमा लागेको 'भक्त' शब्द जोडी 'भानुभक्त' नाटक लेख्नु भएको पाइन्छ ।

यो भक्त शब्दले मन नपरेकी श्री मतीको सास गह्राए झैं नास्तिकहरूको ठाउको दुखी खुम्च्याउनु स्वाभाविक थियो यस्ते अस्तित्वहरूको छाती फूलनु पनि नास्तिकहरूले 'भक्त' शब्दको अभिधा लक्षणा र व्यन्जना अनुसारको अर्थ, भक्त पदलाई पुष्टि गर्ने भानुभक्तका कृतिहरू उपलब्ध छन् या छैनन् भन्ने कुरा खोतल्न 'भक्त' पदलाई हृदयङ्गम गरेर कविका कृति भित्र पस्ने चेष्टा नै गरेनन् । कस-कसैले कृतिहरूलाई खोतल्ने प्रयास गरेता पनि भक्ति भावना रहित केही श्लोक र कविका जीवन यात्राका केही क्रिया-कलापहरूलाई प्रस्तुत गरी सूर्यलाई हातले छोप्ने प्रयास गरे जस्ते गरी झगडामा एकपक्षको वकिलले विरोधीका सही तर्कलाई पनि खन्डन गर्ने प्रयास गरे झैं 'मेरो गोरूको बाह्रै टका' भन्ने उखानलाई साकार बनाई तर्क दिन खोजेको पाइन्छ । उनीहरूका हृदयलाई भक्ति भावनाले व्याप्त भएर छ्याल्ल-ब्याल्ल भै छताछुल्ल भएका भानुभक्तका कृतिहरूले कसरी द्रवित बनाओस् । यस्तै भानुभक्तका अन्धभक्तहरूले आँखा चिम्लेर समर्थन गरी उप-पत्ति सिद्ध जमानालाई ध्यानमा नै न राखी 'भक्त' शब्द विरोधीहरूलाई गालिले हिलो याछ्नु सिवाय केही गरेको देखिएन । यस्तै नै भानुभक्तमा लागेको 'आदि कबि' पदमा र भानुभक्तका कृतिहरूको विषयमा पनि आलोचना र प्रत्यालोचना भएको पाइन्छ. तर यो दुई विषयमा अन्यत्र नै एक नेपालीको शिक्षार्थीको हैसियतले आफ्नो विचार अभिव्यक्त

गर्ने अठोठ गरेको छु । यहाँ म 'भक्त' शब्द र भक्ति भावना जाग्रत हुने कारण र भक्ति भावना सम्बन्धी कृतिहरूको विषयमा मात्र केन्द्रित हुन चाहन्छु ।

'भक्त' भन्नाले साधारणतः विषय वासना देखि विमुख भै सारा समय ईश्वर भजनमा मात्र लगाउनेलाई संझिइन्छ । तर 'भक्त' शब्दलाई यसरी सीमित घेरा भित्र राखी कैदी बनाउनु शब्दगत विशालताको दृष्टिकोणले उपयुक्त हुन आउँदैन । नियम कानूनको र साँसारिक वस्तुहरूले सीमित घेरालाई तोडी विशाल दुँड़ि खेलमा यात्रा गर्न पुगेका पाइन्छन् । त्यसरी नै शब्दका रूढ अर्थ पनि व्यापक हुँदै गएका पाइन्छन् । यसै कारणले साहित्यका विद्वान्हरूले अभिधा, लक्षणा र व्यन्जनालाई जन्म दिनु परेको होला ।

'भक्त' शब्दलाई अभिधा लक्षणा र व्यन्जनालाई अगाडि राखी विचार गर्दा 'भज सेवायाम्' धातुबाट बनेको 'भक्त' शब्दलाई, विषय वासना र सांसारिक प्रपंचबाट विमुख भै ईश्वरका भजन गर्नुमा मात्र सीमित हुन आउँदैन । हाम्रोले जन जिब्रोलाई ध्यानमा राखी विचार गरेमा पनि मातृ भक्त पितृ भक्त गुरु भक्त आदि भन्नाले माता-पितालाई अथवा गुरु देवलाई फुल अक्षताल पूजा गरी भजन मात्र गरि रहने बुझिन न आई तिनीहरूका गुणको अनुसरण गरी तिनीहरूले देखाएको बाटो हिंडने भन्ने कुरा बुझिन्छ । यसरी शब्दगत अर्थ र जन-जिब्रो अनुसारको कुनै अर्थलाई केलाउँदा पनि हरि भजनमा व्यस्त भै सांसारिक प्रपंचबाट मुक्त भएको भन्ने अर्थ बुझिन आउँदैन ।

यी माथिका तर्कहरूबाट 'भक्त भानुभक्त' अथवा 'आदि कवि भानुभक्त'मा लागेको भक्त उपाधि कर्म योगीको रूपमा लागेको कुरा सिद्ध हुन आउँछ । अर्थात् भानुभक्तमा काव्य भावना प्रतिको भक्ति थियो जुन भक्ति भावनाको आडमा रही 'भक्त भानुभक्त' काव्यमय संसार पार गर्न लुखुर लुखुर समर्थ भए । अब यो 'भक्त' पद सम्बन्धी तर्कलाई भित्तोलाउँदै भक्त भानुभक्तमा भक्ति भावना कसरी जाग्रत भयो र उनका कृतिहरूमा कस प्रति भक्ति भावना मुखरित छ, त्यस विषयमा चर्चा गर्नु उपयुक्त संझन्छु ।

साहित्य समाजको प्रतिविम्ब प्रदर्शक हो । यदि साहित्यले सम सामयिक घात प्रतिघात द्वन्द्व अन्तर द्वन्द्वहरू र आगामी समाजको मिरमिरेलाई कुट्टरो पारी

यात्रा गर्न समर्थ भएन भने त्यो साहित्य मृत साहित्य हुन जान्छ। त्यसमा मानिसका धुकधुकी पनि निहित हुँदैन। कालिदास भवभूति शेक्सपियर स्टालस्टाय चेखोव आदि केयौं शताब्दी सम्म पनि जीवित रहेको र उनीहरूका समकालीन अरू कविहरू मरेर गएको बाट स्पष्ट हुन आएको नै छ। यसै कारणले होला नेपाल र अंग्रेजको भयङ्कर युद्धबाट ग्रसित नेपाली समाजको हृदय देखिको नै क्रन्दनले भक्त भानुभक्तमा रहेको स्थायी भावमा टक्कर लाग्न जनताले भक्ति भावना जागृत भएको हुन पर्दछ जसरो क्रौञ्च पक्षीको मृत्युले वाल्मीकिमा करूण रस उत्पन्न भयो। किन भने पश्चिमी साहित्यका महारथी हडसन्को कुनै पनि साहित्यिक कृतिको मूल्याङ्कन, कविको आर्थिक अवस्था कविले यात्रा गरेको समाज, कविलाई प्रेरणा दिने सहयोगीहरू र तत्कालीन शासन व्यवस्थालाई अगाडि राखेर मात्र गर्नु पर्दछ र कविलाई राम्रोसंग बुझ्न सकिन्छ भन्ने भनाइलाई हृदयङ्गम गरी भानुभक्त भित्र यस्ता भानुभक्तले भक्तिमार्ग अपनाउने कारण भानुभ कालीन समाजबाट स्पष्ट मिल्दछ।

( बाँकी ५० पृष्ठमा )

काठमाण्डौबाट निस्कने
त्रैमासिक
आध्यात्मिक तथा वैज्ञानिक
लेख भएको
"आनन्द सौरभ"को
नयाँ अंक अवश्य पढनोस्
सम्पर्क:-पाठ्य पुस्तक पुस्तकालय,
जनकपुरधाम

जनक राज गौतम द्वारा
सम्पादित
"शिवलिङ्ग"
( हास्य-व्यङ्ग संङ्गालो )
दोश्रो अंक प्रकाशित भएको छ।
अवश्य पढनोस्

# भानुभक्तको सामाजिकता र अध्यात्मिकता

– प्रो० कृष्ण प्रसाद उपाध्याय

महान् वैयाकरण महर्षि पाणिनिको सिद्धान्त अनुसार उत्कृष्ठ अर्थ भएको 'सम्' उपसर्ग र 'गति' तथा क्षेपण (प्रेरणा) अर्थ भएको 'अज्' धातु मिलेर भाव अर्थमा 'घञ्' प्रत्यय भई समाज शब्द बनेको छ । अतः 'समाज' शब्दको मुख्य अर्थ हुन्छ—"प्रगतिशील व्यक्तिहरूको समूह"। व्यक्तिको यथार्थ विकास पनि समाजीकरण मै आधारित छ । एक्ला-एक्लै व्यक्तिले आत्म विकासको कुनै पनि काम संपन्न गर्न सक्तैन । अझ आफ्नै मात्र पनि प्राण थाम्न त्यसले सक्तैन । यसमा प्रमाण अघिसार्न पर्ने छैन । किन भने यो कुरो सर्व-साधारणलाई पनि विदितै छ । व्यक्तिको समाजीकरण प्रत्येक युगमा अनिवार्य रहेको इतिहासज्ञे भनि सकेको छ । घात प्रतिघातमय यस स्वार्थ प्रधान युगमा त त्यो अनिवार्यता झन् अनिवार्य हुन आउँछ । समाजबाट अलगिएर बसेका व्यक्तिलाई आदिम युगमा नग्न मानव रूप पशु किंवा हावा खुस्केको पागल भन्न सकिन्छ । 'संधे शक्तिः कलौयुगे वा बलीयसी' हुनाले असंभवलाई पनि संभव यस शक्तिले तुल्याइ दिन्छ । यसमा पनि कुनै प्रमाण वा दृष्टान्त प्रस्तुत गर्न पर्ला जस्तो लाग्दैन । तर समाज वा संघ बन्देमा असंभव पनि संभव भै हाल्छ भन्ने कुरा तवै सत्य साबित हुन सक्छ यदि समाज शब्दको मुख्य अर्थ अनुसार प्रगतिशील समाज छ भने व्यक्ति-व्यक्तमा र समाज-समाजमा पारस्परिक शंका, अविश्वास र भय हटाउन सक्ने कुनै ठास साधन छैन भने विभिन्न गाउँ, जिल्ला, अञ्चल, राष्ट्र वेष भूषा भाषा, आचार र संस्कार जन्य असात्विक अनेकताले सात्विक एकतालाई प्रवेशै गर्न दिंदैन र समाजमा प्रगतिशीलता टिक्न सक्तैन । अनि त्यस समाजलाई समाज न भनी मेला भन्न वा कुनै दृश्य हेर्न भेला भएका यात्रु वा दर्शक भन्न सकिन्छ । परिणाम स्वरूप व्यक्ति किंबा समाजमा पारस्परिक घात-प्रतिघातको स्वार्थी नग्न नृत्यले विदेशी आक्रामणलाई निम्त्याउँछ र तसत् व्यक्ति अथवा समाज सर्वतन्त्र स्वतन्त्रता अपहृत भई दासताको कठिन कारागारमा पर्दछ र सधैंको लागि पिल्सिदै रहन्छ पश्चात्ताप गरी गरी । यसमा पनि प्रमाण अघिसार्न पर्ने छैन । किन भने "प्रत्यक्षे किं प्रमाणम् ?"

त्यस्तो प्रगतिशील समाजमा संमिलित व्यक्तिलाई सामाजिक भनिन्छ। सामाजिक व्यक्तिमा रहेको धर्म (विवेकपूर्ण सर्वकल्याणकारी भावना) नै सामाजिकता हो। यस्तो धर्मको प्रतिपादन पाणिनिके तद्धित प्रत्यय 'ता' ले यहाँ गरेको छ। यस्तो धर्म वा भावना नेपाल संगठनकर्त्ता श्री ५ बडा महाराज पृथ्वी नारायण शाहमा राजनैतिक रूप लिएर रहेको थियो भने केही पछि भएका हाम्रा आदि-कवि भानुभक्तमा काव्यात्मक रूप लिएर। यद्यपि पृथ्वी नारायण शाहका पाला देखि जङ्ग बहादुरका पाला संम बीरगाथा र ईश्वर भक्ति गीतका गायक बनी मौलिक र अनुवाद काव्य एवं फुटकर कविता दिने अनेकानेक नेपाली कवि भए। तिन्ले तत्तत् काव्य द्वारा नेपाली समाजलाई प्रभावित नपारेका पनि होइनन्, तर मेची देखि महाकाली संमका नाना भाषा-भाषी समस्त नेपालीलाई नेपाली भाषा प्रति लभ्याई व्यापक रूपमां यस भाषा सिङ्नेर नेपाली साहित्यलाई उत्तरोत्तर संवर्द्धन गर्दै जाने काव्यात्मक यथार्थ प्रेरणा दिन सकेनन् जस्ले नेपाली भाषाको बलियो एक सूत्रमा आवद्ध गरी नेपालीलाई एक भाषा र एक भाषाकाव्य प्रतिपादित एक संस्कृति प्रति आस्थावान् बनाउन सकोस्। यसमा यथार्थ ईमान्दारी साथ भन्ने हो भने नेपाली समाजलाई दृढ एकताको महत्व पूर्ण शक्ति प्रदान गरी उपयुक्त त्यस्तो त्यो सत्प्रेरणा भानुभक्तले नै दिन सके र भाषा साहित्य तथा राष्ट्रियताको जग बलियो बनाई नेपाली जातित्वलाई सफल बनाए। यसैले यिनलाई प्रबुद्ध नेपाली बाट नेपाल नेपाली र ईश्वरका 'भक्त' औ 'आदि कवि' ई दुई महत्वपूर्ण पदवी प्राप्त भएका हुन्। श्री ५ बडा महाराजबाट भएको राजनीतिक सशस्त्र दवाव- जो समस्त विश्वको एक सम्राट बन्न खोज्ने अंग्रेजी साम्राज्यवादको हुरी चलेको वेला सामयिक हुनाले समुचित थियो र अनिवार्य पनि। त्यस माध्यमबाट उनले नाना भाषा, भेष, भूषा आचार-विचार र राजनीतिले संपृक्त संस्कृतिमा हुर्केका ४ वर्ण छत्तिस जातको नेपाली समाजलाई नेपाली एक जातिमा परिणत गराइ सकेका थिए। बस पछिका आदिकवि भानुले त्यसलाई निक्खर नेपाली भाषामा छन्दोलंकार रसमय चमत्कृतिपूर्ण प्रसाद प्रधान गुणयुक्त सर्वसाधारणबाट बोध गम्य सुन्दर सरल शैली भएको रामायण, वधू-शिक्षा, प्रश्नोत्तरमाला, भक्तमाला र राम गीता जस्ता पद्य-काव्यको पवित्र तथा स्वादिष्ट पञ्चामृत र फुटकर कविताहरूको पाद्य अर्घ्य आदि

षोडशोपचार पूजा सामग्री दिए। अनि निजी राष्ट्रको विश्व-विदित सुन्दर शान्त विशाल मन्दिरमा सामाजिक हृदय सिंहासन माथि स्थापना गरी समस्त नेपाली नर-नारीबाट नवधा भक्तिपूर्वक उपर्युक्त सबै सामग्रीले राष्ट्रभाषाको इष्टदेवलाई सुपूज्य बनाइ दिए। विक्रम संवत् १८७१ आषाढ २७ गते जन्मेका भानुले भानुले फुलवारी झैं नेपाली फुलवारीलाई साहित्यिक प्रारंभिक विकासले विकसित पारी नयाँ-नयाँ भविष्णु साहित्यिक विरुवाहरू उभारी विक्रम संवत् १९२५ आश्विन मैन्हामा 'तत्वमसि' यस ऋग्वेदीय महावाक्यको वाक्यार्थ अनुकूल व्यापक ब्रह्मको अंशावतारी वनी हाम्रो कल्याण गर्न यहाँ आएका थिए उनैमा मिलो स्व-स्वरूप मैं पुनः परिणत भए।

यिन कै प्रशंसनीय प्रयासको फलस्वरूप नयाँ-नयाँ कवि साहित्यकारहरू जन्मिए र अझै धमा-धम जन्मिदै छन्। उनीहरूवाट नयाँ नयाँ काव्य साहित्यका विविध स्वादमय चमत्कृतिपूर्ण विविध अमृत प्रभृति पूजा सामग्रीले विशिष्ट भक्तिपूर्ण पूजा पाई हाम्रो राष्ट्रभाषा पूर्ण गौरवशाली वन्दै गएको छ। निकट भविष्यमै काव्य साहित्यात्मक विश्व भाषालाई र विश्व-कवि साहित्यकारलाई हाँक दिन सक्ने छ भन्ने कुरामा कत्ति पनि शंका छैन। यो सबै कुराले काव्य साहित्यिक क्षेत्रमा हामीलाई गौरवशाली वनाउने श्रेय आदि कवि भानुभक्तलाई नै छ भन्नुमा मीन भेष गर्न पर्ला जस्तो कत्ति पनि लाग्दैन। यिनको पञ्चामृतमा पहिलो अमृत रामायण संस्कृत अध्यात्म रामायणको अनुवाद भए पनि यसमा कयौं गुणा वढी आकर्षक मौलिकता छ जस्ले गायक तथा गायिका पात्र-पात्रा अनुसार नाना-भाकाका :—

"एक दिन नारद सत्यलोक् पुगि गया लोक्को गरूँ हित् भनी" "एकान्त स्थलमा सिता पति थिया सीता हजुर्मा रही" हात्मा चामर ली प्रभुकन तहाँ हाँक्थिन् समिप्मा गई" (पार्वती प्रतिमहादेव) "हेवाणी। तिमि विघ्न पारिकन आउ ती मन्थरा कैकयी, द्विस्त्रीका घटमा पसेर तिमिले काम् सिद्ध लाऊ गई"। (सरस्वती प्रति देवराज इन्द्र) 'गयो खान्या वेला मकन त मिल्यो राज्य वनको", (कौशल्या प्रति राम) "हजुर्को राज् हर्न्या जति जति त छन् नाश् म गरुंला। (राम प्रति लक्ष्मण) 'सुन्यौ भाइ! संसार्मा सरिर अति कच्चा छ जनको, सरिर् कच्चा जानी

नगर तिमि रिस् कत्ति मनको" ( लक्ष्मण प्रति राम ), "राजा खूसि रहुन् म जान्छु वनमा के काम् छ धर्मविसी" ( कैकेती प्रति राम ) "दुष्टे ! आज सिताजिलाई किन यो वस्तर् पुराना दियौ ?" (कैकेयी प्रति क्रुद्ध दशरथ) "धीरा भै रहनू विपत्ति सहनू कस्तै परोस् ता पनि" (गुहजी प्रति लक्ष्मण) "पापी हौ तिमि कुंभिपाक् नरकमा भोग् गर्न जाउली भनी (कैकेयी प्रति क्रुद्ध भरत) "हेमातर् ! मनमा कदापि न परोस् मत् छैन मेरो रती. पाप् लागोस् कछु मन् भया गुरूजिलाइ काटेर मान्या सरी (कौशल्या प्रति दुखी भरत ) "फलाहारी हुन्छु सिरभरि जटा धारि वनमा, म भोली जान्या छू हिंडिकन विचार् ये छ मनमा ।" (वशिष्ठ प्रति दुःखी भरत) "यो गादिता याहिं हजूरको हो. मैले त सेवा गरि वस्नु पो हो । हेनाथ् ! पिता हुन् मतिहिन् भयाका स्त्रीका त साह्रै वसमा पऱ्याका ।" (राम प्रति दुःखी भरत) "फर्कन्न भैया तिम फर्कि जाऊ पिताजिलाई पनि दोष् न लाऊ ।" (दुःखी भरत प्रति राम )" "नता फर्की जान्या न त मकन लान्या वन पनी भन्या मर्छू स्वामित् ! अव अरु कुरा केहि न भनी ।" हेनाथ् ! तत्व सुन्यां म फिर्छु अव ता जान्छू अयोध्यै महाँ. पूजा गर्न दिनू हवस् हजुरका एक् जोर खराऊँ यहाँ" ( राम प्रति भक्त भरत ) "वोलिन् अवाच्य पनि लक्ष्मणलाइ ताहाँ. भज्ली मलाइ भनि मन् छ कि आज याँहाँ । राम् देखि वाहिक अवर् त भजैन मैले तिम्रै अगाड़ि यहिं छोड्दछु देह अैले ।" धिक् चण्डि ! एत्ति भनि खुप् सित चट् पटाया; वन् देविलाइ रखवारी त्यहीं खटाया 'सीता मेरि पियारि देख्तिन म ता जान्छू सिता छिन् जहाँ, फिर्थ्यां त्यस वनमा वडा विरहले सोद्धा न पाई उसै (रावणको पपञ्चमय सीताहरण प्रकरणमा पार्वती प्रति महादेव ), "हेनाथ् होन् कुल की स्त्रिजाति म गरिब् जान्दीन तिम्रो स्तुति" (राम प्रति शबरी ), "सुग्रिव हो कति साख् म हूं कति कुसाख् हा देव ! क्या मत् भयो !" धर्मात्मा तिम पापि भै हुन गयौ ज्यान् व्यर्थ मेरो गयो (राम प्रति वाली) "पाप्को डर् रति भर न राखि तईंले खुस् भै म्हारी हरिस्, सो ही पाप् अहिले प्रकट् हुन गयो तेस् पापले पो मरिस्"(बालि प्रति राम) "जीवै हो पति भन्दछयौ पनि भन्या मर्दैन जिव्ता कहीं, देहै हो पनि भन्द छयौ त किन शोक् गर्छयौं छ ऊ ता यहीं (तारा प्रति राम) "हेसीते कसरी म देखि पर भै वस्छयौ तिमीछौ कहां, प्राणै थाम्न कठिन् भयो म विन ता आपत भया हुन् तहाँ ( किस्किन्धामा विरही राम )

"भ्रमरहरू लताका फूलमा हल्लि-हल्ली, घुनुनु-घुनुनु गर्दै हिंड्दछन् वल्लि-वल्ली" (लंकासौन्दर्य वर्णनमा पार्वती प्रति महादेव) "भोकी मैलि निन्याउरी न त कपाल् कोन्याकि सब् देश् उधै, लट्टामात्र गन्याकि खालि भुमिमा रुँदै वस्याकी यसै! राम् ! राम् ! राम् ! यति मात्र वोलि रहँदी देख्या र साना भई" ( हनुमानको सीता दर्शन प्रकरणमा पार्वती प्रति महादेव ) "मेरी पत्नि भयौ भन्या त सबकी मालिक हुन्याजौं मता साहै प्रेम् गरि राखुंला बुझ अधिक् वैगूनि छन् राम ता।" ( सती सीता प्रति दुष्ट रावण )" "लाल्-लाल् नेत्र गराइ पूर्ण रिसले वोलिन् सिताजी तसै, पाजीरावण बोल्दछस् कति वहुत् दुर्वाच्य वक्-वक् गरी (दुष्ट रावण प्रति सती सीता ) "वस्निन् वस्तिन पो पनी भनि भन्या काटेर टुक्-टुक् गरी, तर्कारी भुटुवा बनाउनु असल मीठा मसाला धरी ( त्रिजटा आदि राक्षसी प्रति रावण ) मौकी शोक् गरि भन्दछिन् अब यहाँ अैले कसोरी मरुँ इन्का हात परेर मर्नु न निको आफै म मछूँ बरू !" शोक् सन्तप्त सिता ) "अघि सरुंत तँ जस्ता कोटि रावण् म मारुं, हुकुमत न भयाको मार्न पो आज क्यारु" (रावण प्रति हनुमान) "फाल् हाली-कन अग्निमा परि मन्या यो चाल् शहर्मा भयो, पोल्यानन् घर एक् विभिषणजिको त्यो मात्र बाँकी रह्यो" ( पार्वती प्रति महादेव) "घर पनि सुनकै छन् गल्लि जो छन् सुनैका, मणि जडित हुनाले झन् असल् छन् कुनैका" (लंका सौन्दर्य वर्णनमा राम प्रति हनुमान ) "काली हुन् जगदम्बिका भगवती सीताजि, राम काल हुन्" (रावण प्रति विभीषण) 'लिन्छू सरण यदि उ शत्रु हवस् दयैले, मेरो व्रतै छ यहि छोड्छु कसोरी अैले' ( विभीषणलाई शरण दिने कुरामा सुग्रीव आदि प्रति क्षमाशील राम) 'हे लक्ष्मण तिमि अनि वाल अहिले ताहीं प्रवेश् गर्दछु, साँचै छू मत बाँचुंला कुठि भया अैले तहीं मर्दछु" ( संकित रामलाई पार्न विश्वस्त लक्ष्मण प्रति सीता 'हात् जोरी विनती गन्या पनि तहाँ नासो लियाको थियां, यो गादी लिइ वक्स योस् हजुरले मैले हजुर्मा दियाँ ( रावणादि मारी भूभार हरी अयोध्या फर्के पछि राम प्रति विनीत सेवक भरत )" "राजा राम् भइ वक्सन् जब भयो प्राणीप्रजा सुख् भया, जो पाथ्यां अधिनाप् अनेक् तरहका ती सव् प्रजाका गया। गर्दैनन् विधवा विलाप मुलुकमा लाग्दैन रोग् व्याध् पनी, सव् डाकू दविया परेन कहि ताप् यो चिज् हरायो भनी। बूढो बाँचि मरेन बालक कहीं वर्षन्छ मेघ् कालमा, छारा झैं

गरि पालि वक्सनु हुँदा सब् ताप् प्रजाको गया" ( राम राज्य वर्णनमा पार्वती प्रति महादेव) "हेभाई ! यि सीताजिलाइ अहिले त्याग् गर्नु मैले पर्‍यो, चोखी जानि लिंदा त दुर्यस बहुत् लोक्ले मलाई गर्‍यो" ( धोबीले लगाएको कलंकमा लक्ष्मण प्रति राम ) "साँची छू त मलाइ जान अहिले बाटो भुमीले दिउन्, (रामलाई निस्कलङ्क पार्न पाताल प्रवेशका लागि प्रार्थिनी सीता) "सीताजीकन जानलाइ वढियाँ बाटो भुमीले दिइन्, यस् रितले जननी सिता जव गइन् खुप् मोहमा लोक् पर्‍या" (पार्वती प्रति महादेव ) "शंभूले पार्वतीथ्यैं खुशि भइ बहुतै प्रेम पूर्वक् कह्याको, संसार्का सोख्य सब् भोग् गरिकन दुनियां सब् सहज् पार गर्छन्" आदि आदि मधुर स्वर लहरी द्वारा आदर्श चरित्र मर्यादा पुरुषोत्तम सपरिजन सीता राम हनुमान, जाम्ववान् आदि बाँदर भालु, वनवासी भरद्वाज आदि ऋषि महर्षि र रावण आदि राक्षसहरूलाई नेपालको जन्म सिद्ध नागरिक नेपाली भाषा-भाषी बनाइ दियो र नेपाली पहाड, पाखो, पखेरो खोला, नाला, झर्ना, झाडो, वन, मैदान, खेत, बारी, पँधेरो, उकालो, ओरालो, हाट, बजार, घर, आँगन, पीढ़ो, कौशी, चोक, वेंसी, विहेघर र मेला उत्सवहरूमा डुलाई हिंडाई, वसाई, हँसाई, बात मार्न र काम गर्न लगाई समस्त नेपाली समाजलाई आलस्य रहित पूर्ण परिश्रमी बनाई थकाईका सातो लियो र चिन्तालाई चितामा जलायो. दशरथ, कौशलया, कैकेयी, सीताराम, भरत, लक्ष्मण, शत्रुघन, माण्डवी उर्मिला श्रुत कीर्ति र हनुमान आदिको आदर्श चरित्रमा तल्लीन बनाइ दियो ।यसरी भानुभक्तले रामायण द्वारा समाज सेवा विशिष्ट रूपमा गरे ।

( बाँकी ६५ पृष्ठमा )

"धीरा भै रहनू विपत्ति सहनू कस्तै परुन् ता पनी
कैल्है मोह विषे न पर्नु जनले माया छ संसार भनी ॥"

रामायण

विश्व साहित्यको इतिहासका पानालाई उल्टाउँदा अंग्रेजी साहित्यका विद्वान् चसर् हाम्रो अगाडि देखा पर्दछन् । उनले फ्रांस र इङ्गल्याण्डको भयानक युद्धबाट त्रसित इङ्गल्याण्डका जनतालाई सान्त्वना दिई युद्धको मारले विषाक्त भएको समाजलाई कोल्टो फेराउन भक्ति मार्ग सम्बन्धी नयाँ अंग्रेजी साहित्य र नयाँ भाषाको सहारा लिएको देखिन्छ । यसैले गर्दा अंग्रेजी भाषा र साहित्यले विश्व विजय गर्न समर्थ भयो र चसर्लाई पनि अजंमरी वनायो । त्यस्तै नेपाल र अंग्रेजको भयानक युद्धवाट पीडित नेपाली जनतालाई सान्त्वना दिन (युद्धको तुमुल ध्वनिले गुंजित नेपालको गगन मण्डललाई भक्तिभावनाले प्लावित गराई नेपाली साहित्यको नादले नेपाली समाजलाई व्यूँझाउन भक्त भानुभक्तले भक्ति मार्ग अवलम्वन गरेको देखिन्छ ।

भानुभक्तले अवलम्वन गरेको बाटो कुनै नौलो होइन । किन भने मुश्लिम शासनवाट पीडित भारतीय जनताको भारतीयत्व वचाउन भारतीय विद्वान्हरूले अध्यात्मवादी राम शिवाजी, विवेकानन्द र महात्मा गान्धीलाई उम्याई विश्व विजय गरेको पाइन्छ, चसरले दर्वारी अंग्रेजी ( Kings English ) भाषाको माध्यमबाट दरवारमा सन्मान पाई आर्थिक पक्षले पनि सन्मानित हुन पुगे तर भानुभक्तले भने जीवितावस्थामा गाँउमा नै मिल्कइ दुःखी समाजमा नै विलीन हुनु पऱ्यो । यस कारण भानुभक्तले प्रयोग गरेको भाषा ठेट नेपाली र चित्रित समाज ग्रामीण हुन पुग्यो । यस भन्दा अतिरिक्त कुरामा माथिका विद्वान् र भानुभक्तमा केही अन्तर छ जस्तो मलाई लाग्देन । अब भानुभक्तमा क-कस प्रति भक्ति भावना थियो त्यस प्रति चर्चा गरौं ।

## देश भक्ति :—

कर्म योगी भानु भक्तलाई 'जननी जन्म भूमिश्च, स्वर्गादपि गरीयसि' यो वाक्यलाई मूल मन्त्र संझी, 'यो वनको अलिकती आगो, रिस्ती खोलाको अलिकति पानी, रम्धा गाउँको अलिकति माटो, चूँदी बेंसीको अलिकति हावा, तनहुँको अलिकति आकाश भएर म जसोरी आएँ उसै गरी जान्छु' यो पंक्तिद्वारा चरमोत्कर्षमा पुऱ्याएको पाइन्छ । निश्चयनै भानुभक्तमा देश भक्तिको भावना निहित थियो ।

यसको पुष्टि भानुभक्तको सिंगो जीवनीले पनि गरेको छ । तर पनि उदाहरणको लागि यी श्लोकलाई पेश गर्न सकिन्छ :-

रिसराग कपट छल छैन जहाँ ।
तव धर्म कती छ कती छ यहाँ ॥
पशुका पति छन् रखवारी गरी ।
शिवकी पुरि कान्तिपुरी नगरी ॥

## गुरुजन प्रति भक्तिः—

युवराज पदवीले रामचन्द्रलाई सन्मानित वनाउँन तयार भएका राजा-दशरथले कान्छी रानी कैकयीको छलमा परी वनवास लाग्न आदेश दिने वावु र सौतेनी आमा कैकयी प्रति पनि रामचन्द्रको लेशमात्र पनि रिस राग हुंदैन । हाँसी हाँसी दुवैसंग विदा माग्न जान्छन् । यसवाट भानुभक्तका कृतिमा मातृ एवं पितृ भक्तिको संदेश कतिसम्म निहित रहेछ भन्नेकुरा रामचन्द्रले दशरथ र कैकयी संग विदा माग्दाको रामायणको यो श्लोकले स्पष्ट पर्दछः —

हेमातर् ! वनजानलाई अवता आयौजना तिन् चली ।
वीदा जानमिलोस् म जान्छु वनमा रिस् राग् रती भर् तली ।
आज्ञाजान मिलोस् पिताजिकी पनी जान्छु सदा खुस् म छु ॥
दुःख् पाउनन् कि भनी पिताजि कन सोक मन्मा नलागोस् क छू ॥

## पतिभक्ति —

हिन्दू नारीहरूको आदर्शको प्रतीक हो, लज्जा, सहनशीलता गुरुजन एवं पति प्रति भक्ति । यसैमा नै हिन्दू नारीहरूको अस्तित्व लुकेकोछ । यसैमा नै सारा नारी-हरूको सर्वस्व पनि निहित छ । यसलाई हृदयङ्गम गरेर हाम्रा आदि कवि भानुभक्तले सारा हिन्द जगतलाई नै सिंगै वोकी वधूशिक्षा लेखनु भएको छ । उहाँलाई हिन्दू आदर्शको प्रतीक सीताले मात्र चित बुझेन । सीताजीको चरित्रले मात्र हिन्द नारीहरूको वाटो सफा होला भन्ने कुरामा अपठित नेपाली नारीहरूले बुझ्न गाह्रै पर्ला भनी ठानी नारीको कर्तव्यलाई स्पष्ट संग किटिएको वधूशिक्षालाई लेख्न

वाध्य हुनु पर्‍यो । हुनत आजकलका उछृङ्खल केही नारीहरूको लागि यी भानुभक्तका उपदेशहरू कर्ण कटु भै तीता लाग्नु स्वभाविक हो। तर स्वस्थ समाजको सिर्जना गर्न, गार्ह्यस्थ जीवनलाई सुखमय वनाउन र 'किन प्रिति गरेर विवाह गर्दछौ' विवाह गरेर प्रितिगर' यसलाई एकाकार वनाउनका लागि ती तीता उपदेशहरू पनि अमला चवाएका मुखमा पानी परे जस्तै होलान् नै। यसकारण वधूशिक्षामा उल्लिखित पति भक्ति सम्बन्धी उपदेशलाई उदाहरणको रूपमा यहाँ पेश गर्न चाहन्छु ।

भक्तिले पति ईश्वरै भनी वुझ्न पाउतलैमा परून् ।
पूजा हो पतिको भनेर घरका काम्मा अगाडि सरून् ॥

## पत्नीभक्तिः –

आदिकालको प्रचलित सती प्रथाको फेदलाई खोजदै जाँदा पति पत्नीको अगाध प्रेमको प्रतीक सिवाय अरू केही भेटिदैन। संसार प्रेम तत्वमा नै अडेको छ। नत्र भने वाफ भै पृथिवी मरू भूमिमा परिणत हुन्थ्यो होला, रोगी त्यसै पिल्सिएर मर्थे होलान्, याङ्क्ल्याक् डुक्लुक् परेको वालकलाई स्तनको फेदमा लगी सेतो रगत चुसाइन्नथ्यो होला यस्तै आफूले निल्न लागेको गाँस ओकलेर अर्कालाई वचाइन्नथ्यो होला। प्रेम पनि दोहोरा हुनुनै कल्याणकारी र आनन्ददायी हुन्छ। एको होरो प्रेममा घृणा र विस्फोट सिवाय अरू आशा गर्न सकिदैन। यसै कारणले होला संसारको एक भागलाई वहन गरेकी नारीमा नारीको जस्तै पुरुषको पनि कस्तो प्रेम हुनु पर्दो रहेछ भन्ने कुरा जगद् जननी सीताजीको वियोगमा विह्वल भएका रामचन्द्रज्यूबाट भनिएको यो श्लोकले स्पष्ट गर्दछ –

चीन्या सव गहना र शोक् वहुत भो हा! मेरी सीता भनी ।
रोया छाती विषे धर्‍या र गहना नानाविलाप्ले जस्सै ॥

### प्रकृतिभक्ति :—

शेली, किट्स् र वड्सवर्थ जस्तै हाम्रा भानुभक्त पनि प्रकृति संगनै खेल्दथे प्रकृतिसंगनै कुरा गर्दथे, प्राकृतिलाई नै आफ्नो जीवन संझन्थे, र उनको साहित्यको श्रोत पनि प्रकृति नै थियो भन्ने कुरा रामायणका यी श्लोकले स्पस्ट्याउँ छन्—

देख्या सुन्दर वाटिका वरिपरि रुख् बेस् लतालेसरी ।
बेह्राका चहु ँ ओर रत्न सरिका फल् फूल् फल्याको भरी ॥

× × ×

अधिक गम्भिर छाया सूर्यको ताप् नपस्न्या
उपर अति पहेंला बेस् चरा मात्र वस्न्या

### कविता प्रतिभक्ति:—

कवि कविता रूपी कामिनी हास्य विनोद र क्रीडा गर्दछ । उनलाई कुत कुत्याई हँसाउद छ र आनन्द प्राप्त गर्दछ । उसलाई कुवेर देखि घृणा लाग्द छ । चुनले पोतेका ठूला हवेली उसको लागि मसान वरावरका हुन्छन् । आफ्नो उदरपूर्ति देखि सिवाय केही कुराको उसलाई आवश्यकता पर्दैन, यसैले होलाहाम्रा महाकवि लक्ष्मी प्रसाद देवकोटाज्यूले 'छ थोर आवश्यकता पुगे पछि म वस्छु संसार नयाँ नयाँ रची' भनेका होलान् र यी कुरालाई भानुभक्तले यसरी हेरेको देखिन्छः—

यहाँ वसेर कविता यदि गर्न पाऊं
यस् देखि सोख अरू थोक म के चिताऊँ

### ईश्वर प्रतिभक्ति:—

मानिसको अन्तीम आश्रित स्थन नै ईश्वर हो । हिन्दू संस्कारवाट संस्कारित जस्ते नास्तिकहरूले पनि आपत्ति अथवा अत्यावस्थामा ईश्वरको संस्मरण गरेको पाइन्छ । मानिसले संसारिक अवलम्वित वस्तु देखि हारखान्छ । अथवा तिनीहरू प्रति आशान्वित हुँदा आशा क्रियान्वित भएको पाउँदैन तवनै ईश्वरको संझना गरेको पाइन्छ । यसको प्रमाण दैनिक जीवनमा नै हामीले पाइ राखेका छौं जस्तै

रुग्णशैय्याको विरामी ईश्वर सम्झन्छ। परीक्षा आएको विद्यार्थी ईश्वर सम्झन्छ। भयङ्कर जङ्गलको एकलो यात्री ईश्वर सम्झन्छ। मानवतावादी 'कुन मन्दिरमा जान्छौ यात्री कुन मन्दिरमा जानेहो' भन्ने महाकवि देवकोटाले पनि मानवको आश्रयले मात्र नपुगी अन्त्यावस्थामा 'आखीर श्री कृष्ण रहेछ एक' भनेका पाइन्छ। यसकारण लक्ष्मी प्रसाद देवकोटा भन्दा धेरै भोटा फटाइ सकेका भानुभक्तको ईश्वर प्रति यस्तो धारणा हुनु कुनै आश्चर्यको कुरो होइनः—

प्रतिज्ञा मैंले यो यम सित गर्‍याँ जन्मि अवता।
सीताराम भजन्या छू विषयहरुमा छाडि ममता॥
बुझ्यौ भाइ ! संसार्मा शरिर अति कच्चाछ जनको।
शरिर् कच्चा जानी नगर तिमि रिस् कत्तिमनको॥

भानुभक्तका कृतिहरूमा भक्ति भावना कति सम्म व्याप्त छ भनी भानुभक्तलाई सीमित वनाउने धृष्टता गर्नु वेकार सम्झी, चसर, शिवाजी रामकृष्ण परमहंस र बिवेकानन्दले अवलम्बन गरेर गोरेटो खनी सकेको भक्तिमार्गलाई भानुभक्तको माध्यम द्वारा पीचलगाउने काम भएको छ। भानुभक्तका कृतिहरूमा, ईश्वर प्रति भक्ति भावना, गुरूजन प्रति भक्ति भावना, साहित्य प्रति भक्ति भावना, पति पत्नी प्रति भक्ति भावना र प्रकृति प्रति भक्ति भावनाले छ्याल्ल ब्याल्ल भै छता छुल्ल भएका छन् यस कारण भानुभक्तमा 'भक्त' उपाधि नलगाई अरू केही पनि लगाउन सकिदैन। अतः भानुभक्त 'भक्त' हुन्।

"एकै वखत् पनि शरण् भनि जो मलाई।
सम्झेर पर्दछ शरण् त म तेसलाई॥
लिन्छू शरण् यदि उ शत्रु हवस् दयैले।
मेरो व्रतै छ यहि छोडछु कसोरि ऐले॥"

—रामायण

# नेपाली रामायण र मैथिली रामायण-एक तुलनात्मक अध्ययन

—प्रो० राजेन्द्र किशोर

अध्यक्ष, अंग्रेजी विभाग

आर. आर. कलेज जनकपुर

एन्टन चेखवको एउठा उक्तिको संझना हुन्छ—

'The geniuses of all ages and of all lands speak different languages but the same flame burns in all' अर्थात् सबै देशका प्रतिभाशाली विद्वान्हरू विभिन्न भाषा बोल्दछन् तर सबैको भित्र एउटै ज्वाला प्रज्वलित भइरहेको हुन्छ। यस उक्तिमा निहित मूल प्रेरणामा त दुइ मत हुनु न पर्ने जस्तो मलाइ लाग्दछ— भए पनि, निजी तवरले मेरो यसमा पूर्ण सहमति छ। किन भने दुइ-चारवटा भाषाका साहित्यहरू पढे पछि मैले पूर्णरूपमा यो अनुभव गरेकोछु कि भाषाले साहित्य-जगतमा त्यो भिन्नता ल्याउन सक्दैन जो भौतिक स्वार्थबाट उत्पन्न द्वेषले ल्याउदछ। तसर्थ भानुभक्तको नेपाली रामायण र चन्दा झा को मैथिली रामायणमा मौलिक भिन्नता खोज्नु अनावश्यक र व्यर्थ मात्रै होइन कि अनुचित पनि होला जस्तो मलाइ लाग्दछ।

तर, शास्त्रीय दृष्टिकोणबाट विचार गर्दा एउटै स्वरूपलाइ दुइटा कलाकारले सिर्जिये पछि, अथवा एउटै कलाकारले विभिन्न समयमा त्यै स्वरूपलाई चित्रित गरेपछि त्यसमा समानता र विभिन्नता हुनु पनि एउटा अकाट्य सत्यने हुनजान्छ। शेक्सपियरले लेखेको 'ओथेलो' यदि उनैले फेरि पाँच वर्ष पछि त्यही 'ओथेलो' लेखेका भए ती दुइटा 'ओथेलो'मा हामी शास्त्रीय दृष्टिकोणबाट विचार गर्दा धेरै भिन्नता पाउन सक्ने थियौं। त्यसैले त भनिएएको छ कि Where Science ends art begins र यहीं आयेर कला, विज्ञान भन्दा धेरै ठूलो स्थान प्राप्त गर्ने स्थितिमा आइ पुग्द छ।

त, भनाइको तात्पर्य यो हो कि नेपाली रामायण र मिथिला रामायणमा मौलिक भिन्नता नभए तापनि दुइटाको तुलनात्मक विश्लेषण गर्नै नसक्ने स्थिति पनि छैन। शास्त्र भएपछि त विश्लेषण उसको स्वभाविक प्रक्रिया भइने हाल्छ।

## तत्कालीन सामाजिक र राजनैतिक परिस्थिति:—

जुन पनि रचनाको विशलेषणको संदर्भमा सबभन्दा पहिले तत्कालीन सामाजिक र राजनैतिक परिस्थितिमाथि विचारगर्नु आवश्यक हुन्छ। नेपाली रामायण र मिथिला रामायणको रचना भएको बेला नेपाल भारत अथवा मिथिलाको सामाजिक परिस्थितिमा हामी धेरै समानता पाँउद छौं। "काठमान्डौंको दरवारी वातावरणले ज्ञान-गुन र सामान्य अध्यात्मवादको निमित्त उपयुक्त जलवायु प्रस्तुत गरिरहेको थियो। पहाड़ खण्डमा पनि अर्कै केहीकारणले यसको अनुकूल परिस्थिति पैदाभयो। बाइसी-चौवीसी राज्यको विलयले स्थानीय राज्याश्रय लुप्त भए, जस्लेगर्दा ब्राह्मण, गुरु पुरोहित र अरूपनि राजाश्रित परिवारहरूको जीविका अर्जनको क्रममा व्याघात पऱ्यो।" आर्थिक परिस्थिति जन्य उद्विग्नता, लाचारी र व्याकुलताले सारा समाजलाइ घेरेको थियो। अंग्रेजहरूसित पराजय, भीमसेन थापाको पतन, थापा र पाँडेहरूको संघर्ष र सामान्य राजनैतिक अवस्थाको अस्थिरताले देशभरि स्वच्छ आदर्शको अनिश्चितता आदिको परिणाम यो भयो कि देशको सामान्य वर्गले घोर अस्तव्यस्तता र अशान्तिमा आफ्नो बाटो फेलाउन सकेन। शिक्षाको न्यूनताले संस्कृतको अवहेलना गरायो, निराशावाद र प्रवल विधर्मी शत्रुको भय र त्रासले सामान्य जनतालाई रामको मर्यादा-वादको गोड़ामा घोप्ट्यायो र त्यस्को पनि स्पष्टवोधको र अनुभवको शून्यतामा रामको पनि वाल्मीकिवाला पौरुष गुणयुक्त राम होइन वरन अध्यात्मवादको रंगमा डुबेका रामको आदर्शप्रति लोकलाइ डोऱ्यायो" [१] यस सन्दर्भमा ऋषीकेश शाहको यस उक्तिलाई पनि उद्धृत गर्नु अप्रासङ्गिक न होला —

१—भानुभक्त र उनको युग—बालचन्द्र शर्मा।

The entire nation had been sieged with a deep sense of frustration because its movement for nationalist expansion had received a serious setback' the first defeat it had suffered since the time of Prithwinarayan. The people's pride had been humbled and it appeard as though they had lost all sense of national life and purpose. In this context Bhanubhakta rendered the story of the Ramayan in popular verse with the object of conveying the message of Ram to the people so that all of them might be roused. ... [२]

अर्थात त्यसवेला नेपालको सामाजिक र राजनीतिक स्थितिपूर्ण अस्तव्यस्तता, उद्विग्नता र अस्थिरताको थियो।

त्यस्तै स्थिति मिथिलाकी मात्र होइन कि भारतबर्षको पनि थियो, जुनवेला मैथिली रामायणको रचना भयो। मैथिली रामायणका रचयिता कवीश्वर चन्दा झा को जन्म त्यसबेला हुन्छ जब भारतमा प्राचीन र नवीन शक्तिको बीच संघर्ष चलिरहेको थियो। हिन्दू र मुसलमान राज्य पारस्परिक द्वेष र साम्प्रदायिकताले गर्दा कमजोर भइसकेको थियो र एउटा तेस्रो शक्ति आफ्नो सत्ता स्थापना गर्नमा संलग्न थियो। संपूर्ण देशको सामाजिक अवस्था त्यस्तै थियो, हिन्दू समाजको त झन। पटक-पटकको पराजयले गर्दा धर्म प्रति अविश्वास, नास्तिकताको उदय, पाखंडीपनाको चलतीले गर्दा सामाजिक राजनीतिक र आर्थिक अवस्था अतिनै दयनीय भइसकेको थियो। चन्दाझाले लेखेको एक दुइटा अंशवाट स्थिति बढी प्रकट हुन्छ।

भाइ-भाइकें पढैछ नित्य-नित्य गारि
ठकलोक हक्क पाब साधुकें उजारि ...
... ... ... ... ...
न्यायक भवन कचहरी नाम
सभ अन्याय भरल तेहि ठाम [३] ...

२—'भानुभक्त'-ऋषीकेश शाह (Heroes nad Builders of Nepal)

३ चन्द्र पद्यावली, (पृ० २४६)

चन्दा झाका समसामयिक भारतेन्दु हरिश्चन्द्रले पनि आफ्नो 'भारत दुर्दशा' मा लेखेको छ—

रोवहु सव मिलि आवहु भारत भाई
हा ! हा ! भारत दुर्दशा न देखी जाई [४]

यसरी भानुभक्त र चन्दा झा दुइटैले समान सामाजिक, राजनैतिक र आर्थिक परिस्थितिमा जन्मिए र हुर्किएकोले दुइटैको रचनाको प्रेरणामा के भिन्नता हुन सक्थ्यो होला ?

**काव्य प्रेरणाः—**

कुनै पनि कवि अथवा कलाकारको लागि सव भन्दा महत्वपूर्ण र बलियो प्रेरक तत्व हुन्छ तत्कालीन सामाजिक परिस्थिति । र, हामीले माथि नै देखि सक्यौं कि दुवैने समान सामाजिक विषमता र कटुतावाट गुजरेका थिए—फलस्वरूप मूल प्रेरणामा केही फरक देखिदैन । हुनत भानुभक्तको काव्य प्रेरणाको सम्वन्धमा घाँसीको कथा धेरै जनाले मानेको कुरा पनि धेरैलाई थाहैछ—

भर जन्म घाँस तिर मन दिइ धन् कमायो ।
नाम क्यै रहोस् पछि भनेर कुवाँ खनायो ॥
घाँसी दरिद्रि घरको तर बुद्धि कस्तो ।
मो भानुभक्त धनि भै कन आज यस्तो ॥......

तर यस पद्यमा निहित जम्मै तर्कहरूलाई काटेर वाल चन्द्र शर्माले यो पद्य भानुभक्तले लेखेको होइन भन्ने कुरालाई चरितार्थ गरेका छन् । "विचारणीय कुरा छ कि पहाड खण्डमा केवल घाँस मात्र काटेर जीविका अर्जित गर्ने खालका

---

४ भारत दुर्दशा, भारतेन्दु हरिश्चन्द्र

घाँसी हुन्नन् ।———फेरि काठमाण्डू र मधेसमा झैं पहाड़ पर्वतमा धन खर्च गरी परोपकारार्थ इनार खनाउने चलन पनि छैन ।...... ...यसको अतिरिक्त प्रथम छन्द को चतुर्थ पदमा प्रयुक्त 'मो भानुभक्त' भानुभक्तको कलम वाट निस्कनु एकदमै असम्भव छ—.. ।'' ५ जे होस, तर वास्तवमा काव्य रचनाको लागि जुन शाश्वत प्रेरणा हुन्छ—तत्कालीन युगको परिस्थिति प्रति आफ्नो मानसिक प्रति क्रिया—त्यो नै हामी दुवै कविमा पाउँछौं—। र यसरी पनि भानुभक्त र चन्दा झा अथवा नेपाली रामायण अथवा मिथिला रामायणमा कुनै तात्विक भेद हुनु न पर्ने जस्तो लाग्दछ ।

दुईटैले रामायणको कथालाई नै किन आफ्नो आधारमाने भन्ने प्रश्न माथि विचार गर्दा उत्तर प्रस्ट झल्किन्छ । समस्त हिन्दू समाजलाई एक सूत्रमा वाँध्न सक्ने, समाजका सारा अंग-प्रत्यंगको समुचित विवेचना गर्न सक्ने समाजका आजका विभिन्न स्तरका मानिसहरू र एउटै मानिसले उसको विभिन्न रूपमा प्रतिपादित गर्नु पर्ने कर्त्तव्यको विवेचना गर्न सक्ने अथवा छोटकरीमा मानिसलाई पूर्ण वनाउन सक्ने रामायण जस्तो ग्रन्थ मेरो दृष्टिमा अरू छैन । राजा-रानी, आमा-वावु, दाज्यू भाइ-दिदी-वहिनी, मालिक-नोकर, सासु-वुहारी, भनौं प्रत्येक मानिसको आदर्शको यस्तो व्यावहारिक चित्रण अरू कहां भयेको छ र ? त्यसैले दुवैले यही रामायण-लाई आफ्नो आदर्श ग्रन्थको रूपमा स्वीकार गरे भने यसमा कुनै अस्वाभाविकता हो होइन । यो त झन् गर्वको कुरा हो कि नेपाल र भारतको तत्कालीन अँध्यारो मा प्रकाश फिंजाउने भानुभक्त र चन्दा झाले अध्यात्म रामायणलाई नै अँगाले ।

## चित्रणः—

स्थिति विशेषको चित्रण हेर्दा दुवै कविका आस्था, आस्तिकता अथवा आदर्शमा कुनै तात्विक भेद न देखिए तापनि चित्रणको विस्तृततामा अलि फरक जस्तो देखिन्छ । जति विस्तृत ढंगले मिथिला रामायणमा स्थिति विशेषको चित्रण पाइन्छ त्यत्ति भानुभक्तको रामायणमा पाइदैन तर यस्ले गर्दा प्रभावमा कुनै विशेष फरक परेको पनि देखिन्न जहाँ भानुभक्तले प्रारम्भ मैः—

५ वालचन्द शर्मा—भानुभक्त र उनको युग ।

"एक दिन् नारद सत्यलोक् पुगि गया लोक्को गरूँ हित् भनी ।
ब्रह्मा ताहिँ थिया पऱ्या चरणमा खुसी गराया पनी ॥
क्या सोध्छौ तिमी सोध भन्छु म भनी मर्जी भयेथ्यो जसै ।
ब्रह्माको करूणा बुझेर ऋषिले विन्ती गऱ्या यो तसै ॥
हे ब्रह्मा जति हुन् शुभाशुभ सबै सुनी रह्याँछू कछू ।
बाँकी छैन तथापि सुन्न अहिले इच्छा म यो गर्दछू ॥

वर्णन गरेका छन्, त्यहाँ चन्दाझाले आफ्नो मिथिला रामायणमा यस्तो वर्णन गरेका छनः-

"सत्यलोक मुनि पहुँचल जखन, देखल विरञ्चिक वैभव तखन
जनिकर सिरिजल सब संसार, तनिक विभव के वरनय पार
बाल दिवाकर सन छवि भास, मार्कण्डेय प्रभृति तट वास
स्तुति करइत छल छथि छलहीन, ककरहु ततय देखल नहि दीन
ब्रह्मा संग शारदा दार, सकल अर्थ जानल व्यवहार
देव चतुर्मुख विश्वक नाथ, तनिका नारद जोडल हाथ
भक्ति दण्डवत चरण प्रणाम, कयलनि स्तुति वचनै अभिराम
तुष्ट कहल तनिका खगकेतु, कहु नारद अयलहुँ की हेतु
कहलनि नारद देव समाज, अयलहुँ प्रभु अछि वड गोट काज
सकल शुभा शुभ जे किछु रहल, हमरा अपने पूर्वहि कहल

ई दुब अंशलाई विचार गर्दा चित्रणको विस्तृततामा हामीले अलिकता फरक पायेता पनि मूल र अनिवार्य विषयको चित्रणमा कमी, अनास्था वा नास्तिकता जस्तो भान अलिकति पनि हुँदैन । र यसलाई म भानुभक्तको एउटा विशेषता नै भन्दछु. जुन विशेषता हामी Baconका निबन्धहरूमा पाँउछौं-Condensation थोरै शब्दमा धेरै भन्नु कुनै साधारण कुरो होइन । फेरि यसबाट भानुभक्तको अर्को कलात्मक विशेषताको पनि बोध हामी पाँउछौं – त्यो हो—भानुभक्तको काव्य मा निहित 'सोद्देश्यता'। उत्पीडित, अपमानित र ग्लानियुक्त समाजमा राष्ट्रिय चेतना जाग्रत गर्ने उद्देश्यले रचित रामायणमा भानुभक्तले भाषाको श्रृङ्गार पद्दि त्यतिविधि

न लागेर आफ्नो संदेश समाजमा पुऱ्याउने उद्देश्य राखेको हुनाले नै वर्णनको विस्तार तिर उनले त्यत्ति ध्यान नदिएको जस्तो लाग्दछ । सम्प्रेषण (Communication) को इच्छा जो कुनै पनि कलाको सफलताको लागि अनिवार्य तत्व मानिन्छ भानुभक्त-मा धेरै मात्रामा भएको भन्नु यो पनि अत्युक्ति नहोला । छोटकरीमा हामी भन्न सक्छौं कि भानुभक्तको यो वर्णनात्मक मितव्ययिता (economy of exprssion)का मुख्य कारण थियो—सोद्देश्यता, सम्प्रेषणीयता र कला जीवनको लागि हो भन्ने तथ्यमा आस्था ।

तर यस्को अर्थ यो होइन कि मैथिली रामायणमा भएको विशद वर्णनबाट भानुभक्तको रामायणबाट पूरा हुने उद्देश्यको पूर्त्ति हुँदैन वरन यी उद्देश्य पूर्त्तिका साथ-साथ यस्मा हामी काव्यात्मक चमत्कार र मैथिली संस्कृति जन्य ईश्वर प्रति आस्था बोध पनि पाँउछौं ।

## भाषा र छन्द प्रयोगः—

साहित्य सँधै जन पक्षलाई लियेर शुरू हुन्छ, जनताकै भाषामा जनताकै कथा जनताकै निम्ति । भानुभक्तको तुलना यसरी अंग्रेजी साहित्यका आदि कवि चौसर (Chaucer) संग गर्न अत्युक्ति न होला । चौसरले यद्यपि फ्रेन्च साहित्य द्वारा सम्पूर्ण यूरोपीय साहित्यको सेकडौं वर्षको परम्परा पाइसकेका थिए तै पनि अंग्रेजीका आदि कविमा साहित्यको अखाडावाजी भेटिने छैन । भानुभक्तले पनि यसरी चौसर र वाल्मीकि झैं स्वदेशी साहित्यको परम्परा बसाले । भानुभक्तले त्यही भाषा लिए जोकि सबै श्रेणीका परिवारमा प्रचलित थियो; र उहाँको शैली पनि सबै परिवारलाई ग्राह्य हुने खालको थियो र छन्दको पनि त्यही परम्परा स्वीकार गरे जो समाजमा प्रचलित थियो । वर्ण वृत्तने काव्य रचनाको माध्यम भई सकेकोले भानुभक्तले त्यसैलाई स्वीकार गरे । त्यस बेला स्तोत्रहरू प्रायः शिखरिणी छन्दमा भएकोले यो छन्द जनसाधारणमा श्रुति परिचित थियो र शार्दुलविक्रीडित, वसन्ततालिका आदि छन्द को प्रचलन पनि पहिले देखिनै चलि-आएको थियो । त्यसैले भानुभक्तले मुख्य रूपमा प्रयोग गरेका दुई छन्द — शिखरिणी र शार्दूलविक्रीडित —युगको निकै रूचि-अनुकुल थियो ।

तर छन्द प्रयोग दृष्टिले मैथिली रामायण त एउटा अनौठो काव्य हो—त्यसमा प्रयोग गरियेका छन्दहरू भन्दा वढ़ता छन्द साहित्यमा छँदै छैन भन्नु पनि अत्युक्ति नहोला। वसन्ततिलका, शिखरिणी र शार्दूलविक्रीडित छन्दको प्रयोगमा दुवै समान रूपले सिद्ध हस्त छन। एक दुइ वटा उदाहरणले यो तथ्य प्रमाणित हुन सक्छ। भानुभक्तले गरेको शिखरिणी र वसन्ततिलकाको प्रयोग—

**शिखरिणीः—**

(१)

सुन्यौ भाई संसार्‌मा शरिर अति कच्चा छ जनको,
शरिर् कच्चा जानी नगर तिमि रिस् कत्ति मनको।
सबै भोग् चञ्चल् छन् विजुली सरि एक् छिनन् रहन्या,
विचार् यस्तो राखी सहु तिमि वडो हुन्छ सहन्या॥ अ० का० (३०)

**वसन्ततिलकाः—**

(२)

जो रामचन्द्र तिर रात् दिन चित्त धर्छन्।
राम कै चरित्र पढ़ि खुप् सित मग्न पर्छन्॥
तिन्का ति कर्मवशका सब पाप छुट्छन्।
वैकुण्ठका सकल सौख्य तिनै त लुटछन्॥ श्रीयु०का० (१६८)

**शिखरिणी :—**

(३)

अये हंसी चिन्ता चित परिहरू सुस्थिर रहू।
वियोगैं व्यग्रा की विरह दिन धीरा अहँ सहू॥
विशालाक्षी देखू अछिन शिशुता अङ्ग धयले।
सुशीला साध्वी छी निकट छथि प्राणेश अयले॥

वसन्ततिलकाः—

( ४ )

श्री राम चन्द्र पमेशक छुत जानू,
लङ्का निशाचर समस्तक काल मानू ।
वाली वली सकल जानल शौर्म सेटा,
उद्दण्ड अङ्गद तनीक थिकौंह वेटा ॥

दुवै कविले वडो सरलता र सहजताका साथ यी छन्दको प्रयोग गरेका छन् । त्यस्तै शार्दूलविक्रीडित छन्दको पनि हामी पाँउछौं—

मेरो वुद्धि म विन्ति गर्छु अहिले राम् हुन् जगत्का पती ।
जीती सक्नु कदापि छैन अरूले क्या भो हजुर्को मती ॥ (श्रीयुद्धकांड)

त्यस्तै मैथिली रामायणमा भएको प्रयोग—

गेली सूर्जनखा नटी कपटिनी गोदातटी धक्कटी ।
श्री रामानुज तीक्ष्ण खड्ग लगलैं ख्याता मही नकटी ॥ (लङ्का कांड)

हुनत मैथिली रामायणमा प्रयुक्त छन्दमा भानुभक्तको रामायण भन्दा वढी शास्त्रीयता छ तर यस्को कारण पनि स्पष्ट छ—भानुभक्तले संस्कृतमा सर्वज्ञता प्राप्त गर्न सकेनन्, फेरि उनको उद्देश्य पूर्तिको लागि यो त्यत्ति आवश्यक पनि थियेन। धेरै शास्त्रीय भइ दिएको खण्डमा जत्ति प्रचलन जनतामा सजीलैं सित उनको रामायणको भयो त्यो हुन गाहारो पर्दथ्यो ।

दुइटै रामायणलाई विचार गर्दा एउटा कुरा अरू प्रस्ट झल्कन्छ—त्यो हो दुवैको भाषामा स्थानीय प्रभाव जो आवश्यक र स्वाभाविक हो । जस्तो कि भानुभक्तको रामायणमा प्रयुक्त 'विन्ती गर्नु,' 'वक्सिनु' आदि प्रयोग हामी मैथिली रामायणमा पाँउदैनौं । यस्ता प्रयोगहरू यदि एकातिर उदात्त संस्कृति र विनम्रताको परिचायक छ—(यदि वास्तवमा त्यो हृदयबाट निःसृत भएको भए) भने

अर्को तिर आत्म-सम्मान माथि एउटा चोटको पनि (यदि राणाकालीन गुलामीबाट बाध्य भएर प्रयुक्त भएको भए)। तर यस्ता प्रयोगबाट मेरो दृष्टिमा एउटा अतिनै विनम्र संस्कृतिको परिचय पाइन्छ—र यदि मैथिली रामायणमा यस्तो प्रयोग छैन भने यस्को यो मतलब पनि होइन कि मिथिलाको संस्कृतिमा विनम्रता छँदै थिएन। यो त मात्र स्थानीय प्रभाव हो जसबाट कुनै पनि कलाकार अप्रभावित हुन सक्दैन।

अरू-अरू दृष्टिकोणबाट विचार गर्दा पनि हाम्रो दुइ रामायणमा कुनै तात्विक अथवा मौलिक फरक पाँउदैनौं। प्रकृति चित्रण शृङ्गार वर्णन आदिमा दुवैले समान रूपले सफल प्रयोग गरेका छन र दुवैको जुन उद्देश्य थियो त्यसमा दुवले समान रूपले सफलता प्राप्त गरेका छन्, तर भानुभक्तले अलि बढता। किनकि भानुभक्तको भाषा चन्दा झा भन्दा बढी बोधगम्य र सरलछ। यदि पं० लाल दास कृत मिथिला रामायण संग तुलना गर्यौं भने सरलता र बोधगम्यताको दृष्टिले मिथिला रामायण (लाल दास कृत) समानतामा पुग्न सक्ला।

यसरी घोर निराशा र विषमताको स्थितिमा जनसमाजका बीच भानुभक्त र चन्दा झाको रूपमा दुइटा छिमेकी-राष्ट्रमा यस्ता व्यक्तिको अवतरण भयो जस्ले आफ्नो वाणीद्वारा जनसमाजको मनः स्थितिलाई गिर्न दिएन। उनीबाट समाजले जान्यो कि भौतिक विजयको अतिरिक्त पनि एक यस्तो दिशा छ जहाँ बढेर विकास का अर्को मर्यादा कायम गर्न सकिन्छ। दुवैले अन्तर्वृत्तिको ढोका खोलेर जनसमाजको मनः स्थितिलाई पतनोन्मुख हुनबाट रोके। यसरी युगको परिस्थितिले दुवै कवि बाट केवल भाषा, मर्यादावाद धार्मिक प्रेरणा र मनोरंजन मात्र पाएन, कि उनको साधनद्वारा युगानुकुल पथ पनि भेट्टाए। र म त यहाँ सम्म भन्न पनि दुस्साहस गर्छु कि दुवैमा यदि एउटा पनि नजन्मिएको भए त्यसबाट उत्पन्न दुष्परिणाम दुवैले भोग्नु पर्दथ्यो। त्यसैले दुवै अविच्छिन्न छन् —दुइटै राष्ट्र दुइटै भाषा-भाषी को लागि अनिवार्य, दुवै अविस्मरणीय र दुवै पूज्य।

• • •

## ( उन्नचासौं पृष्टको बाँकी )

दोस्रो अमृत यिनको 'वधूशिक्षा' हो जस्को माध्यम वाट यिनले नारी समाजलाई मर्यादाको परिधिभित्र राखी गृहकलह रोक्ने चेष्टा गरे। सन्तुष्ट संमिलित परिवार भएको घरलाई महत्व दिएर उसलाई श्री संपन्न मङ्गलमय वनाउन खोजे।

"न गृहं गृहमित्याहु गृहिणी गृह मुच्यते"

प्रत्यक्ष घरलाई घर भन्न सकिन्न। यथार्थ घर गृहिणी (पत्नी) नै हो भन्ने वेदको अभिप्राय वोध गराउने स्मृतिलाई समाजमा प्रचार गरे। यसरी नेपाली समाजको कल्याणका लागि यिनले अथक परिश्रम गरेकाछन्। भौतिकता प्रधान आजको झिलिमिलि जगत् अगाडि यो वधूशिक्षा पागलकोप्रलाप, पुरुषको स्वार्थी धूर्तता र सर्वतन्त्रस्वतन्त्र आधुनिक वधू (नारी) को घररूपी कठोर कारागारमा जर्काइदिने कुत्सित कानून ठहरिए पनि आदर्श पूर्ण आध्यात्मिक दृष्टिकोण राखी वास्तविकता तिर ध्यान दिएको खण्डमा आज पनि धेरै अंशमा यो वधूशिक्षा उपयोगी हुन आउनेछ। हिजोका वधू प्रायः अशिक्षित हुनाले घरको परिधिभित्रै रही घरलाई निःस्वार्थ भावनाले मङ्गलमय पारेका थिए। र, आजका शिक्षित वधूले पनि घरको परिधिवाहिर निस्केर पनि घरलाई मङ्गलमय वनाउन प्रकृतिले अनिवार्य वनाएको छ। प्रकृति विरुद्ध पनि आँखा चिम्ली सर्वतन्त्रस्वतन्त्र वन्नु वेग्लै कुरा हो।

वधूशिक्षामा भानुभक्तले वेदको अभिप्राय, धर्मशास्त्र र पुराणहरूका मन्तव्यहरूनै निजी मौलिकता अघिसारी सर्वसाधारणको वोधगम्य सरल भाषामा व्यक्त गरेका छन्।[卐]

---

卐 वेदः—"स नोऽर्यमा देवः प्रेतो मुञ्चतु मापतेः।" "आयुष्मानस्तु मे पति रेधन्तां ज्ञातयो मम।" (वधू) "सखे! सप्तपदा भव मामनुव्रता भव।" "प्रजापति ष्ट्वा 'नयुनक्तु मह्यम्।" "अघोरचक्षु रपति घ्न्यो धि शिवा पशुभ्यः।" (पति)

धर्मशास्त्र :—भुङ्क्ते भुक्ते ऽथवा पत्यौ, दुःखिते दुःखिता च या।
मुदिते मुदिता ऽत्यर्थं प्रोषिते मलिनाम्बरा॥ →

पति, शासू ससुरा, देवर, जेठाज्यू, नन्द र आमाज्यूहरूबाट चाहिए जति द्रव्य, गहना, वस्त्र आदि पाई निजी स्वार्थ पूर्ति गर्न पाइरहेका आधुनिक शिक्षित भनाउँदा कैयौं वधूहरू आज पनि भानुभक्तकै वधूबनी उनका सेवा टहल र घरधन्दा तिर तत्पर रहेका देखिंदैछन्। र त्यस्तो स्वार्थ पूर्तिको अभावमा सेवा टहल र घरधन्दाको सट्टा तलाक र तिरस्कार अघि सारिएको पनि देख्तै छौं। त्यसो हुँदा आजका वधूहरूलाई पनि वधूशिक्षामाका धेर जसो शिक्षा उपयुक्त नै होलान् भन्न अनुपयुक्त हुनेछैन जस्तो लाग्दछ।

"एक् थोक् भन्छु न मान्नु दुःख मनमा हे मित्र तारापति,
तिम्रा यी जतिछन् जहान हरुता जुम्न्या रह्याछन् अति।
सून्या दन्तवझान आज घरको कर्कर् गऱ्याको जसै,
भर् रात् जाग्रम भ भयो मकनता लागेन निद्रा कसै।
धन् इज्जत् घरबार देख्छु बढिया छैनन् कुनै चिज् कमी,
बूहारी यदि कर्कशा हुन गया क्या घर् गरौला तिमी।
साह्रै भोंक उठ्यो मलाइ र वधूशिक्षा बनायौं पनि,
यस्ले पत्नि बुहारि छोरिहरुको तालिम् गरौला भनी।"

---

→सुप्ते पत्यौ च या शेते पूर्वमेव प्रबुद्ध्यते।
नान्यं कामयते चित्ते सा विज्ञेया पतिव्रता॥
द्वारोपवेशनं नित्यं गवाक्षेणाऽवलोकनम्।
असत्प्रलापो हास्यं च नारीणां दूषणानि हि॥
पुराण:—श्वश्वो र्गालिप्रदा नारी नित्यं कलहकारिणी।
सा जलौका च यूका स्यात् भर्तारं भर्त्सते च या॥
स्वभर्तरि च कृष्णे च भेदबुद्धिं करोति या।
कटूक्त्या ताडयेत्कान्तं सा गोहत्यां लभेद् ध्रुवम्॥
पति र्नारायणः स्त्रीणां व्रतं धर्मः सनातन।
सर्वकर्म वृथा तस्याः स्वामिना विमुखा च या॥
स्त्रीणां च पतिदेवानां तच्छुश्रूषाऽनुकूलता।
तद्बन्धुष्वनुवृत्तिश्च नित्यं तद्व्रतधारणम्॥

यसरी वधूशिक्षाको आरम्भ मै लेखेको देख्दा शासूबुहारीको दन्तबझानबाट रात भरि जाग्रम गर्न परेको झोंकमा वेद पुराण धर्मशास्त्रमा लेखिएका कडा नियम हरू पनि यस शिक्षामा राखिदिएको बुझिन्छ ।

यसबाट वधू प्रति यिनले अन्याय गरे भन्नु वेदसिद्ध विशुद्ध हिन्दूधर्मावलम्वी हामी नेपालीका लागि सुहाउँदो हुने छैन ।

अनि आफ्नी पत्नी रेवती प्रति आफ्नू अनन्य प्रीति दर्शाई—

"विन्ती एक म गर्दछू सुन प्रिये प्रीती निरन्तर् रहोस् ।
ताहाँको मन पींजरो म मुनियाँ यै चाल् सदाकाल् रहोस् ॥"

भनी लेखेको यस कविते पत्रांशबाट दाम्पत्य जवन पतिपत्नीको आजीवन पारस्परिक स्वार्थहीन र उदात्त प्रीतिबाट नै सुखमय हुन सक्छ भन्ने उनको उदार विचार देख्ता नारी प्रति उनको भावना कठोर थियो भन्न सकिन्न । अतः एकहोरो पतिपूजाका समर्थक मात्र थिए भन्नु पनि ठूलो भूल हुने छ ।

घांसीसित घटेको घटनाबाट रामायण लेख्ने, यस्तै घटनाक्रमबाट रातमा वास नपाई निस्कासित भई गाउँ वाहिर रुख मनि गुज्रान गर्न पर्दा गजाधर सोतीको दुच्छर घरबुढीलाई अलच्छिन् की भनी निन्दाको कविता लेख्ने, जेलको दुःखद घटनाले उड्डुस उपियाँ र लामखुट्टेलाई पनि नृत्य गीतको पात्र बनाई जेल सुधारको लक्ष्यले कविता लेख्ने, आफ्ना मित्र सुब्बा धर्मदत्त मरे पछि उनका छोराहरू उद्योग धन्दा छाडी लामृ नलीले तमाखुको सर्को तान्दै थर्की पासामा लंपट बढखर्ची विलासी भएको प्रत्यक्ष देख्ता भर्त्सना को कविता लेख्ने र भोलि. भोलि भन्दै दुःख दी रहने डिठ्ठा विचारीहरूलाई लक्ष्य गरी कविता लेख्ने. भानुभक्तले नारी प्रति पुरुषले गरेको अत्याचारो घटना पनि प्रत्यक्ष घटेको भए वेद पुराण धर्मशास्त्रहरुले प्रतिपादित कडा नियम भएको वरशिक्षा पनि अवश्य लेख्ने थिए ❀

---

❀ वेदः—"पुरन्धि मह्यं त्वादु गार्हपत्याय देवाः ।" "जरां गच्छ परिधत्स्व वासः, भवा कृष्टीना मभिशस्ति पावा ।" 'मम तुभ्यं च संवननं तदग्नि रनुमन्यताम् ।' "प्राणैस्तै प्राणान् सन्दधामि, अस्थिभिस्ते अस्थीनि सन्दधामि, मांसैस्ते मांसानि सन्दधामि. त्वचा ते त्वचं सन्दधामि ।"∞

यो कुरो उमेर ढल्केर पनि एक जना पाल्पाली सुब्बाले दोश्री विहे गर्'र सके पछि म कहिले मर्छु, ज्योतिषबाट विचार गरिदिनु भनी मित्र ज्योतिषी सुब्बा धर्मदत्तलाई लेखेको चिट्ठी देख्दा स्वयं यिनले—

"पैले दाङ् गइ एक् विवाह गर्'यो भन्या पनी लेखियो।
फेर्तेसै चिठिमा म मर्छु कहिले भन्न्या पनी देखियो॥
आयू ज्यों त विचार् विवाह न गरी पैले उचित् हो लिन्या।
उल्लू हौ तिमि उल्लुलाई अहिले कुन् उत्तरै हो दिन्या ?"

भन्ने उत्तर कविता मै लेखि दिएबाट पनि सिद्ध हुन आउँछ। कविहृदय उत्तेजनात्मक आकस्मिक घटना-चक्रबाट जाग्रत हुन्छ। वाल्मीकि, कालिदास र तुलसीलाई सम्झे प्रमाण खोज्न पर्ने छैन।

आधुनिक भौतिकताको रमझममा आधुनिक भनाउँदा कविहरूले पनि वर शिक्षा लेख्न सकेनन्। धेरै पछि तिवारीज्यूलाई खस् खस् लागेछ र वल्ल आज वर-शिक्षा पनि उहाँबाट हामीले पाएकाछौं। जोइटिङ्ग पनि पोइटिङ्गी पनि भएको यस विचित्र जमानामा वधूशिक्षा त पर राखौं, वधू(पत्नी)लाई आफैंले जन्माएको बच्चा पाल्न पनि धाई दिने, घरको चुल्होलाई भयाउँकिरे रुवाइ रुवाउँदै होटलको प्लेट तिर दौडाउने, दन्तवक्रानले पति शासु शसुराहरूको सातो पुत्लो लिन लगाउने र विदेशी प्रभावसा परी राष्ट्रियताहीन अर्द्धनग्ने प्रदर्शनीको पुतलीपात्रा बनाई रूपमा-

∾ "सुमङ्गली रियं वधूरिमां समेत पश्यत, सौभाग्यमस्यै दत्वा यथास्तं विपरेत न।" "नाहमेनां जह्याम्।" (पति)

धर्मशास्त्रः-द्विधा कृत्वात्मनो देह मर्द्धेन पुरुषोऽभवत्।
अर्द्धेन नारी तस्यां स विराज मसृजत् विभुः॥
प्रजनार्थं महाभागा पूजार्हा गृहदीप्तयः।
स्त्रियः श्रियश्च गेहेषु न विशेषोऽस्ति कश्चन॥
त्यज्यते समयान्माता त्यज्यन्ते भ्रातरोऽपि वा।
त्यज्यन्ते बान्धवाः सर्वे नाङ्गना सहगामिनी॥
न गृहं गृह मित्याहु र्गृहिणी गृहमुच्यते।∾

धुरीको विषय रसमा लम्पट बन्दै आफुले आफैंलाई बिर्सी जथाभावी फलाक्ने र कागज बरबाद गर्ने कैयौं बरहरू पनि ट्वांटले स्वाँठ बनी, नक्कलीलाई गाँठ गनी, नित्य मार्री मार्री भन्दै सक्कली गृहिणीलाई भकुण्ड्याउँदैछन्, र स्वयं पनि भकुण्डिई सडक र नालामा शास फेर्ने र न फेर्ने दुवैथरिका लाश बन्दै छन् अनि श्वान जन्य पवित्र गगाजलले स्नान पनि गर्दै छन्। यस्तो देखेर तिवारीज्यूको 'वरशिक्षा' पनि छक्क परेको छ। अब त आज पार्वती र सीता जस्ता आदर्श नारी जन्माउने, र पशुपति जस्ता देव देव र मर्यादा पुरुषोत्तम रामचन्द्र जस्तो घरजुवाईबाट सुरक्षित रहेको हाम्रो नेपालमा पनि तलाकको धाक उत्तरोत्तर बढ्दै छ। वधूबाट बर र बरबाट वधू छुट्टिँदैछन्। अग्नि साक्षिक वैदिक प्रतिज्ञा पनि बिर्सी आर्यको महत्व-पूर्ण आदर्शलाई तल झार्दैछन्। जे होस् तर वधूशिक्षा लेखेर समाज सेवाको निजी पवित्र कर्तव्य भानुभक्तले पूरा गरे। आधुनिक चञ्चल समाजले मान्नु न मान्नु बेग्लै कुरा हो।

तेश्रो अमृत – शङ्कराचार्यको संस्कृत 'प्रश्नोत्तरी' को अनुवाद–''प्रश्नोत्तर माला'' हो। यसले वेदान्त दर्शनको दिग्दर्शन गराई नेपाली समाजलाई दया, क्षमा संयम, विवेक उदारता, इन्द्रिय निग्रह, तथा आस्तिकता आदि उदात्त गुणको प्रचार गरो धर्मार्थकाम मोक्ष यी पुरुषार्थ चतुष्टयको भागी बनाउने लक्ष्य राखी समाजको पवित्र सेवा गरेका छन्।

---

∞ 'धर्मे अर्थे कामे च नातिचरितव्या त्वयेयम्'' (शसुरा)

''नातिचरामि।'' (जुवाई)

''बहिर्लोम्ना तु षड् मासान् वेष्टितः खरचर्मणा।
दारातिक्रमणे भिक्षां देहीत्युक्त्वा विशुद्ध्यति॥''

['जस्ले पत्नी प्रति अत्याचार गर्दछ, त्यो क्रूर पति रौं समेते गधाको छाला मात्र छ मैन्हा सम्म वस्त्रको सट्टा शरीरमा लगाई भिक्षा पाउँ भन्दै हिंड्यो भने मात्र त्यस अत्याचारको पापबाट मुक्त भई शुद्ध हुन सक्दछ।'']—

पुराण :—सर्वाः प्रकृतिसंभूता उत्तमाधममध्यमाः।
योषिता मवमानेन प्रकृते श्च पराभवः॥∞

चौथो अमृतः—"भक्तमाला" यिनको मौलिक कृति हो। यसले नाना प्रकारका सांसारिक भोग विलास ऐस आराममा मात्र लागि मायामय काम क्रोध लोभ मोह मद मात्सर्य यी छ अन्तःशत्रु, आँखा, कान, नाक, जिब्रो छाला यी ५ ज्ञानेन्द्रिय हात, पाउ, वोली र २ शुचि-इन्द्रिय, मन, बुद्धि चित्त, अहंकार यी अन्तःकरण चतुष्टय र रूप, रस गन्ध, स्पर्श र शब्द यी पाँच विषय बासना तिर लागी तेरो र मेरो तँ र म मा सधैं रमाई अमुल्य मानव जीवन बरबाद गर्नु मानवता होइन पशुता हो आखिरमा ईश्वर-शरणागति विना सांसारिक प्रवल वन्धन फुक्न सक्तैन र अन्तमा पाउनु पर्ने मोक्ष गति पाइँदैन, जसवाट परलोक सुखमय हुन सक्छ भन्ने महत्वपूर्ण कुराको वोध गराई सरल मीठो र आकर्षक भाषामा शिखरिणी छन्दको संगीतमय चमत्कृति पूर्ण शैलीले ईश्वर प्रति भक्तियुक्त तन्मयता ल्याउन सक्ने छ यदि कर्ता भर्ता हर्ता दयालु ईश्वर प्रति ईमानदार मानव छ भने। यस्तो महत्वपूर्ण काव्य लेखेर भानुभक्तले समाजको महत्वपूर्ण सेवा गरेकाछन्।

पाँचौं अमृत होः—"रामगीता" यद्यपि यो रामायण उत्तर काण्डकै एक अंशको अनुवाद हो, तथापि दर्शन शास्त्रको महत्वपूर्ण व्यापक विषय भएको र साते काण्ड रामायण लेखिसकेपछि छुट्टै गरिएको अनुवाद हुनाले यसलाई पाँचौं अमृत भन्न असुहाउँदो हुने छैन भन्ने मेरो व्यक्तिगत धारणा छ। यसमा भानुभक्तको विशिष्ट आध्यात्मिकता दर्शन शास्त्रको अध्ययनवाट वञ्चित रहेका पनि सर्वसाधारण व्यक्तिलाई बोधगम्य हुने गरी सरल शब्दमा व्यक्तिएको छ।

---

~यः स्वनारीं परित्यज्य निर्दोषां कुलसंभवाम्।
परदाररतो हि स्यादन्यां वा कुरुते स्त्रियम्॥
सोऽन्यजन्मनि देवेशि! स्त्रीभूत्वा विधवा भवेत्।
यत्र नार्यश्च पूज्यन्ते वरदा स्तत्र देवताः॥
यत्रैता न च पूज्यन्ते सर्वास्ता विफलाः क्रियाः।
पत्न्यानुकूलया भाव्यं यथाशीलेऽपि भर्तरि।
दु शीलापि तथा भार्या पोषणोया नरेश्वर!

यिनका:—"फुटकर कविताको षोडशोपचार पूजा सामग्री" मा-

"यति दिन पछि मैले आज वालाजि देख्याँ।" इत्यादि

"चपला अवलाहरू एक् सुरभा, गुनकेशरिको फुल ली शिरमा।" इ०

"लाम्खुट्टे उपियां उड्डुस् यि संगि छन् यिन्कै लहड्मा वसी।" इ०

"भोली भोली हुँदैमा यतिदिन वितिगो वक्सियोस् आज भोली।" इ०

"गजाधर् सोतीकी घरवुढ़ि अलच्छिन् कि रहिछन्।" इ०

"न पोथी पात्रा छन् न कलम मस्यानी छ संगमा।" इ०

"पैले दाङ् गइ एक् विवाह गरियो भन्ने पनी लेखियां।" इ०

"विन्ती एक म गर्दछु सुन प्रिये प्रीती निरन्तर् रहोस्।" इ०

"विद्वान् जनले लोहलाई वेच्नु छैन।" इ०

आदि आदि जीवनोन्मुख आकर्षक फुटकर कवितहरू+ र पठन पाठनलाई बढी महत्व दी आफ्नो प्रियतमा रेवती र छोरा रमानाथको नाउँमा—

"म ताहाँ आया पछि तैंले न पढ्याको ठहरायाँ भन्या तेरा ज्यानको आशा नराखो लात मान्याँछु कि तैंले मर्नु पर्ला। कि मरी सुख पाउन्याछस् कि पढि पाउन्याछस्।"

इत्यादि लेखेको चिठ्ठीवाट पनि समाजलाई समुन्नत पार्ने सुधारको वाटो देखाएर भानुभक्तले समाजको राम्रो सेवा गरेका छन्। ▭ यसरी विचार गर्दा यिनको सामाजकिता अत्यन्त उच्च थियो भन्न करै लाग्छ।

---

+ भानुभक्त रामायणले मात्र जाँच्चिन्नन्, यद्यपि त्यही उनको सर्वोत्तम रचना हो। फुटकर कविताहरू आफैं वोल्दछन्, तिन्मा सरल माधुर्य र सहृदयताको चमत्कार पाइन्छ। तिन्मा पाण्डित्यको प्रदर्शनी छैन। लवजहरू दिललाई सोधी सोधी निस्कन्छन्। मेरो निम्ति नेपाली साहित्यमा भानुभक्त सर्वश्रेष्ठ पुरुष हुन्।

**—महाकवि देवकोटा लक्ष्मी निवन्ध संग्रह**

▭ भानुभक्त र भानुभक्तका कृतिहरूलाई जित्न सक्ने उल्लेखनीय अन्य कृति अथवा विशिष्ट प्रतिभा हामीले अहिले सम्म भेट्टाउन नसकेकोले मोतीरामले साँचै ठम्याएकै हुन्।

**—कृष्णचन्द्र सिंह प्रधान-सुस्केरा, मोती अङ्क-२०२७**

अब म यहाँ भानुभक्तको आध्यात्मिकता तिर लैजानु भन्दा पहिले घाँसीको प्रेरणाजन्य 'भरजन्म घाँस तिर' इत्यादि दुई कविता यिनकै हुन् वा मोतीरामका भन्ने पक्ष विपक्षात्मक छलफल तिर एक छिन अलमल्याउन चाहन्छु—

(१)

भर् जन्म घाँस तिर मन् दिइ धन् कमायो ।
नाम् क्यै रहोस् पछि भनेर कुवाँ खनायो ।
घाँसी दरिद्रि घरको तर बुद्धि कस्तो ।
मो भानुभक्त धनि भैकन आज यस्तो ।।

(२)

मेरा इनार नत सत्तल पाटि क्यै छन् ।
जो धन् र चीजहरू छन् घर भित्र नै छन् ।।
तेस् घाँसिले कसरि आज दिएछ अर्ति ।
धिक्कार हो मकन वस्नु न राखि कीर्ति ।।

यी दुइ पद्य भानुभक्तले लेखेका होइनन्, मोतीरामकै कल्पना जन्य हुन् अतः भानुभक्त र घाँसीको संवाद भएकै छन भन्ने इतिहास शिरोमणि श्री बाबुराम आचार्यज्यूको भनाइ छ । यसलाई प्रमाणित गर्न उहाँले—

"यिनै कवितामा प्रयुक्त शब्द कुवाँ र इनारको एउटै अर्थमा प्रयोग गर्नु, भानुभक्तले कतै पनि व्यवहार न गरेको तर मोतीरामले व्यवहार गरेको मो भानुभक्त मा 'म' को ठाउँमा 'मो' लेखिनु, धर्मशाला अर्थमा काठमाडौंमा मात्र व्यवहृत भएको तर तनहुँमा नभएको 'सत्तल' शब्द लेखिनु र तनहुँमा न अघि न अहिले प्रचलित घाँस बेच्ने कुरा लेखिनु आदि तर्क प्रस्तुत गर्नु भएको छ । भानुभक्तले "राधा दामोदरः प्रीयताम्" र "सम्वत्" यस्तो अशुद्ध लेखेबाट संस्कृत व्याकरणको ज्ञान यिनलाई थिएन र संस्कृत भाषामा लेखपढ गर्न सक्तैन थे । सरल संस्कृत गद्य-पद्यको सामान्य अर्थ सम्म बुझ्न सक्तथे । यसैले रामायण र प्रश्नोत्तरीको अनुवाद गरेका हुन् पनि भन्नु भएको छ (पुराना कवि र कविता)

तर यी तर्कमा मेरो सानो ब्रह्मले मलाई सहमत हुन दिएन। किन भने संस्कृत 'कूप' शब्दके तद्भव शब्द 'कुवाँ' हो र कूप-शब्दके प्रसिद्ध अर्थमा इनारको व्यवहार पनि हामी गर्दै छौं। कुण्डको अपभ्रंस पनि 'कुवाँ' होइन 'कुंड' हो, जो सिंचाईको निम्ति खेतमा खनिएको सानो परिधि भएको हुन्छ तराइ तिर। र, उक्त दुवै पद्यमा 'वसन्ततिलका' छन्द छ। अतः इनारको ठाउँमा 'कुवाँ' शब्द राख्ता छन्दोभङ्ग हुन्छ। यसैले छन्दो भङ्ग नहुने पाउमा कुवाँ शब्द र छन्दोभङ्ग हुने पाउमा इनार शब्द एउटै अर्थ भएका राखिएका हुन्। 'मो भानुभक्त'को 'मो' को सट्टा 'म' राख्ता पनि छन्दोभङ्ग हुन्छ। यसैले यहाँ पनि 'म' नलेखी 'मो' लेखेका हुन्। 'सत्तल' शब्द हाम्रो नेपालकै नेपाली हुनाले छन्द मिलाउन वा अनुप्रास पार्न जहाँ कहीं वसेका स्वदेशी विदेशी सबैले यो शब्द प्रयोग गर्न सक्छन्। र जतातते देखे सुनेका भानुले तनहुँमा वसेर पनि प्रयोग गर्नु असम्भव छैन। हाम्रा कवि शिरोमणि लेखनाथले पनि अनुप्रास पार्न र छन्द मिलाउन चौतारोको सट्टा कतै 'चौकी" त कतै "चौको" कतै फेरिको सट्टा 'फिर" फोहरको सट्टा 'फुहर" 'शीतल' को सट्टा शीतलो छक्कको सट्टा 'छक', माता, आमा, मुमाको सट्टा 'महतारी', कागको सट्टा 'कौवा', कोदाको सट्टा मडुवा आदि आदि विदेशी र विकृत शब्दको प्रयोग गरेका छन् (तरुणतपसी) महाकवि देवकोटाले पनि सेतोको सट्टा 'सफेद'को प्रयोग गरेका छन्। कवि माधवप्रसाद देवकोटाबाट पनि छटपटिएको सट्टा 'तड्पेको' लेखिएको छ 'राधा दामोदर' शब्दमा द्वन्द्व समास न गरी "राधासहितो दामोदरः" यसरी शाक पार्थिवादि मध्यमपदलोपि कर्मधारय समास गरेको खण्डमा "राधादामोदरः प्रीयताम्" पनि शुद्धै हुन्छ। यसमा पुराणकर्ता वेदव्यास पनि सहमत छन्। ❀

अनि नेपाली भाषालाई प्राणजस्तै प्यारो गर्ने भानुभक्त भाषामा तन्मय भैसकेकाले संवत्सर' लेख्ने वेलामा भ्रमवशात् संवत्सरकै तद्भव नेपाली शब्द सम्वत वा संवत् लेखिनु धेरै संभव छ। 'सम्वत्' यो नेपाली हुनाले संस्कृत 'संवत्सर'को अपेक्षा जन्य अशुद्ध छ भन्न पाइएन। अतः यिनले संस्कृत व्याकरण पढेका थिएनन्

---

❀ "लक्ष्मीनारायणः श्रीमान् भुक्तिमुक्तिफलप्रदः।" पद्म पुराणीय कार्तिक-माहात्म्य — अ० ३ श्लो० १३

भन्न पनि सकिन्न। भानुभक्तको समयमा नेपाली व्याकरण गर्भ मैं हुनाले यिनका कृतिमा यसको कमी स्वाभाविक छ। अतः यसमा पनि यिनीलाई दोषी वनाउन सकिन्न। यिनका वाजे श्रीकृष्ण आचार्यको संपूर्ण पाण्डित्य उनीवाट यिनले पाएका थिए। यिनी सहज प्रतिभावान् , सुधारवादी, कर्मयोगी, आशु कवि र संस्कृतका सुयोग्य विद्वान् थिए। यिनको जन्म कुण्डलीको पहिलो कविता A हेर्दा यिनी ज्योतिषमा पनि सुयोग्य थिए भन्ने थाहा हुन्छ।

अध्यात्म शास्त्रमा पनि यिनको पूर्ण दखल थियो। किन भने लरतरो विद्वान्ले प्रश्नोत्तरी जस्तो सरल संस्कृत पद्यहरूको अनुवाद गर्न सके पनि यिनको दर्शनशास्त्रको गूढ़गूढ़ आध्यात्मिक सिद्धान्त र संस्कृतका कठिन कठिन शव्दले पूर्ण भएको अध्यात्म रामायणको अनुवाद गर्न सक्तैनन्। तर भानुभक्तले रामायणका प्रत्येक शव्दको गूढ रहस्यलाई सरस र सरल शैलीले, संस्कृतका स्रग्धरा, शिखरिणी शार्दूल विक्रीडित र वसन्ततिलका आदि राम्रा राम्रा छन्दहरूले र उपमा आदि अलङ्कारले सिंगारी मीठो भाषामा निजी मौलिकतामय अनुवाद गरेका छन्। यो कुरा यिनको रामायण इमान्दारी साथ ध्यानस्थ भई अक्षरशः पढ़ेर मनन गरे पछि अवश्य पनि सत्य सावित हुनेछ। नेपाली भाषा भाषी उत्तम

---

A श्रिशलीवाहन्का समय षड़्त्रिंशत् भइकन।
अनी आषाढ् मास्को दिन पनि उनन्तिस् गइकन॥
घटी एक्तिस् माहाँ विघटि पनि वत्तिस् परिकन।
नवांशक् कण्ठीरव् धनुष परि जो वेस लगन॥१।
मिथुन्मा सुर्यैछन् जिवनिलय मिन्का विधु अनी।
महीसुत् बुध् राहू शशिसदनका ई तिन पनी॥
गुरु भाग्यस्थान्का रविभवनमा गैकन वस्या।
भृगुजो ता आफ्नै सदन वृषमा गैकन पस्या॥२॥
मकर्मा सौरी छन् ध्वज सहितका स्वर्ग्रहि जहाँ।
वतायाको क्रमले ग्रहहरू वस्या कुण्डलिमहाँ॥

—भानुभक्त

मध्यम र निम्न, सबै वर्गको नेपाली भाषा एकनासके थियो र यसै भाषामा यिनले सर्वकल्याणकारी रामायण हामीलाई दिए। +

यसको मूलकारण घाँसीके प्रेरणा (अर्ति) हो। आध्यात्मिक गूढ रहस्यहरूको अनुवाद झन् चमत्कृतिपूर्ण छन्। प्रमाणमा रामगीताको अनुवाद ध्यानस्थ भई हेनु नै पर्याप्त हुने छ।

संस्कृतका तत्कालीन कट्टर पन्थी पण्डितहरूले भाषामा कविता लेख्ने भनी नाना षड्यन्त्र गर्दै यिनलाई सामाजिक वहिष्कार सम्म गर्न खोजी धेरै नै पीरेका हुनाले 'भाँट' शब्द सम्झी उठेको झोंकमा आफ्नू घरका 'भाटा'हरू फ्याँकेझैं संस्कृत कविता तर्फको प्रवृत्तिलाई परित्याग गरेरै होला एक पनि संस्कृत कविता लेखेनन्। अतः संस्कृतका एक पनि कविता लेखेका छनन् भनी यिनलाई संस्कृतको राम्रो ज्ञान थिएन भन्नु सुहाउँदो हुने छैन भन्ने मेरो सानो ब्रह्मले भन्दछ। अनि भानुभक्तको समयमा कहाँ के कस्तो चलन थियो भन्ने कुरा तिर विचार गर्दा सरकारी वा सामाजिक तहवाट राम्रो सोध खोज अझै भएको छैन। वरु मोतीरामले नै जे जति सके परिश्रम पूर्वक खोजीनिधि गरी हामीलाई भानुभक्त सित चिनारी गराइ दिए। T

---

\+ आफ्नो रामायणमा भानुभक्तले लेखेको भाषा नै वर्तमान नेपाली भाषाको थालनी हो। नेपाली भाषाको वर्तमान युग भानुभक्त रामायणवाट प्रारम्भ हुन्छ। अन्वय गरी अर्थलाउन नपर्ने तथा क्रियाको प्रयोग पनि साधारण वोलचाली नेपाली भाषामा जस्तो हुन्छ, उस्ते हुनाले भानुभक्तका रामायणको भाषा आदर्श नेपाली भाषा हो।

**—सूर्यविक्रम ज्ञवाली-नेपाली भाषाको संक्षिप्त इतिहास।**

T तनहुं तिर तमाम ग्रन्थको खोज गर्दै, घरघर घुमि सारा भानुका भक्त हिंड्थे ॥

**—पारसमणि प्रधान।**

आज राम्रो सोध खोज तिर लाग्दै नलागी मोतीराम सहित अनेकानेक विचारक र विद्वान्हरूबाट निर्णीत भैसकेको घाँसीको प्रेरणा (अर्ति) लाई नै अस्तित्वहीन वनाउनु अवश्य पनि उचित हुनै छैन । 卐

अव यिनको आध्यात्मिकता तिर विचार गर्दा 'आत्मा' 'अध्यात्म' 'आध्यात्मिक' र आध्यात्मिकताको परिचय तिर लाग्नु आवश्यक हुनाले त्यतै तिर लाग्दै छु ।

"अहमात्मा गुडा केश ! सर्वभूताशयस्थित: ।" —गीता, अ. १०

को अनुसार सवै प्राणीको अन्तःकरण (मन, बुद्धि, चित्त र अहंकार) मा आधारित जीव-रूप अविनाशी ब्रह्मलाई आत्मा भन्दछन् ! +

यही आत्मा त्रिगुण (सत्व रज र तम) मयी मायाले आवद्ध रहुन्जेल जीव वन्दछ र त्यस्तो मायाले मुक्त, अन्तःकरण-चतुष्टयको आधारले रहित भएको उही जीव सच्चिदानन्द, निराकार र अविनाशी स्व-स्वरूप ब्रह्म भईजान्छ ।

आत्मा वा इद मे वाग्र आसीन् । स इमान् लोकान् असृजत् ।

—ऋग्वेदीय-ऐतरीयोपनिषद्

---

卐 १, घाँसीको प्रेरणाजन्य लोक कल्याणकारी भावनाको परिणामस्वरूप भानुभक्तले 'भर्जन्म घाँस तिर" भन्ने २ कविता लेखे ।

—सूर्यविक्रम ज्ञवाली-भानुभक्तको संक्षिप्त जीवनी ।

२, घाँसीको प्रेरणाबाटै भानुभक्तले नेपाली समुदायलाई रामायणको भेट अर्पण गरे ।

—यज्ञराज सत्याल-नेपाली साहित्यको भूमिका ।

३, घाँसीमा उनको परमेश्वर वोल्यो ! उनको आत्मालाई हृदयको देशमा धारा वनाउन मन लाग्यो । संसारमा आतप-म्लान यात्रीहरूको निमित्त योटा पाटीको पौवाली हुन मन लाग्यो ।

—महाकवि देवकोटा ल० नि० सं० ।

+ मनको सुन्दर सिंहासनमा जगदीश्वरको राज ।

को अनुसार सृष्टि भन्दा पहिले यही जीवात्मा आत्मा, ब्रह्म, वा परमात्मा थियो। यसैले चौध भुवनको सृष्टि गर्‍यो भन्ने बुझिएबाट जीवात्मालाई आत्मा, ब्रह्म, वा परमात्मा मान्नुमा शंका छैन।

"एको देवः सर्व भूतेषु गूढ़ः। सर्वव्यापी सर्व भूतान्तरात्मा।।"

—श्वेताश्वतरोपनिषद्

को अनुसार एउटै ब्रह्म नाना प्राणी (जीव) मा अभिन्न बनी गूढ रूपले रहेका सर्वव्यापी अन्तरात्मा हुन्, भन्ने बुझिएबाट पनि जीव रूप आत्मालाई आत्मा (ब्रह्म) भन्न सकिन्छ। ☫

"अविनाशी वा अरे ऽ य मात्मा।"

—वृहदारण्यकोपनिषद्

यस उपनिषद्ले पनि यो जीवात्मा अविनाशी आत्मा (ब्रह्म) हो भनेको छ।

"जीवो ब्रह्मैव नापरः।" "अंशो नाना व्यपदेशात्।"

"आभास स एव च।" —श्रुतिः

यी तीन श्रुतिले पनि जीवात्मा ब्रह्म नै हो, अर्को हइन, नाना उपाधिले भिन्न भएपनि जीवात्मा आत्मा (ब्रह्म) कै अंश हो, र नश्वर शरीरमा आत्मा (ब्रह्म) को आभास नै जीव हो भनेबाट आत्मा र जीव, जीव र आत्मा दुबैमा शरीर जन्य भेद मात्र हुनाले आत्मा शब्दको 'अर्थ' जीवात्मा, परमात्मा, आत्मा र ब्रह्म सबै हुन्छ भन्ने सिद्ध भएको छ।

यहाँ जीव नै ब्रह्म हो, ब्रह्मको अंश जीव हो र ब्रह्मको आभास जीव हो भन्ने उक्त तीनोटै श्रुतिमा विभिन्नता देखिए पनि तीनोटैको लक्ष्य आखिरमा जीवलाई आत्मा (ब्रह्म) नै मानेका छन्। जसरी एउटै आकाश गाग्रोभित्र र वाहिर पनि देखिन्छ र जसरी सूर्य पानीमा प्रतिबिम्ब रूपमा र वाहिर विम्वरूपमा देखिन्छन्।

---

☫ भित्र छ ईश्वर बाहिर आँखा। दर्शन किन्तु कहीं दिंदैन चर्मचक्षुले कानामा।—

—महाकवि देवकोटा—यात्री

र, भिन्नताको आभास हुन्छ तापनि गाग्रो फुटे पछि त्यसमाको आकाश बाहिरको आकाशमा र पानी सुके पछि सूर्यको प्रतिविलम्व उनको विम्वमै मिली एक भइजान्छन्, उसैगरी ब्रह्म, (आत्मा) ब्रह्मको अश र ब्रह्मको आभास (विम्व) शरीरमा मायावद्ध छउन्जेल जीव कहिन्छ र माया मुक्त भए पछि उसको ज्ञानदृष्टिमा शरीर रहेर पनि रहँदैन र स्वस्वरूप परमात्मा वा ब्रह्म रूपमा परिणत भई जीवन्मुक्त रहन्छ। र, शरीर छुटेको खण्डमा पनि ब्रह्मरूपमा मुक्त नै रहन्छ। यसरी 'अविच्छिन्नवाद र विम्ब प्रतिविम्ववाद यी दुवै दार्शनिकवादवाट पनि आत्मालाई जीव रूपमा रहेको र सच्चिदानन्द ब्रह्मरूपमा उन्मुक्त रहेको एकै ब्रह्म (आत्मा, मानिएको छ।

यही 'आत्म' शब्द र 'अधि' उपसर्ग (अव्यय शब्द मिली अधिकरणात्मक 'विषय' अर्थमा अव्ययीभाव समास भई 'अध्यात्म' यो समासात्मक शब्द वन्दछ। र अविनाशी ब्रह्मको सच्चिदानन्दमय सत्ता वा भाव, जो सत्व रजस्तमो गुण तरङ्ग-मयी माया भन्दा पर छ, जुन सत्ता वा भावमा जीवलाई चिर विश्रान्ति पाइने गर्दछ, व्यक्त तथा अव्यक्त प्रकृति (माया) ले चिर संपर्क रहित निर्गुण निरञ्जन तथा' सर्वतन्त्रस्वतन्त्र स्वाराज्यमा विराजमान ब्रह्मको उही सत्ता वा भावलाई नै—

'अध्यात्म' भन्द छन्। ब्रह्मको यसै सत्ता वा भावलाई 'तत्त्वमसि' यस सामवेदीय महावाक्यको 'तत्' शब्दले पनि संकेतित गर्दछ।

यसै ब्रह्म सत्ता वा ब्रह्मभावरूप—"अध्यात्म विषयक हुने" अर्थमा 'अध्यात्म शब्द देखि तद्धित 'ठञ्' प्रत्यय भई 'आध्यात्मिक' शब्द वन्दछ। ज्ञान, भक्ति, श्रद्धा, भावना, विचार आदि उदात्त शब्द र ज्ञानी, ज्ञानवती, भक्तिमान्, भक्तिमती, श्रद्धावान्, श्रद्धावती, भावनावान्, भावनावती, विचारवान्, विचारवती, आदि उदात्त व्यक्तिलाई आध्यात्मिक भनिन्छ। र, यो आध्यात्मिक शब्द विशेषण हो।

र, यसै आध्यात्मिक शब्द देखि भाव गुण वा धर्म) अर्थमा तद्धित प्रत्यय 'ता' भई आध्यात्मिकता शब्द वन्द छ।

यस्तो यो आध्यात्मिकता आदिकवि भानुभक्तमा थियो वा थिएन, थियो भने कसरी, कुन अवस्थामा, के कस्तो थियो ? यस प्रश्नमा विचार गर्दा

"यौवनं धनसंपत्तिः प्रभुत्व मविवेकिता ।
एकैक मप्यनर्थाय किमु यत्र चतुष्टयम् ॥"

यो नीतिवाक्यनै सर्व प्रथम औंचिसर्छ । यसबाट "तरुनो उमेर, धनसंपत्ति, प्रभुता र विवेकशून्यता; यी चार एक्ला एक्लै पनि आइलागेमा अनर्थकारी हुन्छन् भने सबै संमिलित भई आइलागेछन् भने झन् कस्तो अनर्थकारी होलान् स्पष्ट गरि रहन पर्दैन । आँखा, कान; नाक, जिब्रो र छाला, यी ५ ज्ञानेन्द्रियलाई संचालित गरी आत्मा (जीव) लाई सांसारिक बन्धनमा जकडी व्यथित र अशान्त पारिराख्ने चञ्चल, महाबलवान्, लगाम नभएको बदमास घोडाझैं वशमा नरहेको निरंकुश मन छ । जसको लक्षण अर्जुनले गीतामा श्रीकृष्ण सित भनेका छन्:—

"चंचलं हि मनः कृष्ण! प्रमाथि बलवद् दृढम् ।
तस्याहं निग्रहं मन्ये वायोरिव सुदुष्करम् ॥"

यस्तो मन सहित उक्त पाँच इन्द्रिय र काम, क्रोध, लोभ, मोह मद र मात्सर्य यी छ अन्तः शत्रुहरूले उक्त यौवनादि चारोटै अनर्थकारी जाशूसहरूको सहयोगले शरीर रूपी मन्दिरमा रहेको विवेक रूपी अमूल्य संपत्ति लुटिलिन्छन् र मन्दिरका मालिक देवता आत्मा (जीव) लाई दुःख दिन्छन् ।

यस अनुसार बहुविवाह गर्ने पतिलाई आफाफ्ना स्वार्थ पूर्ति तिर तानातान गरी सौताहरूले झैं मनको इशारामा उक्त पाँचोटै इन्द्रियहरूले आत्मा (जीव) लाई अशान्त पारी रूप, रस, गन्ध, स्पर्श र शब्द रूप विषय वासनाको लागुले लठयाउँदै वेग्ले पीरी रहन्छन् । यो कुराः—

"जिह्वैकतो ऽमु मपकर्षति कर्हि तर्षा,
शिश्नोऽ न्यत स्त्व गुदरं श्रवणं कुतश्चित् ।
घ्राणोऽ न्यत श्चपलदृक् क्व च कर्मशक्ति,
र्बह्व्यः सपत्न्य इव गेहपतिं लुनन्ति ॥"

महर्षि वेदव्यासको यस सदुक्तिबाट सिद्ध भएको छ । यस्ता यस्ता अध्यात्म शास्त्रीय संकेत तिर ध्यान दिंदा उमेर ढल्किनु भन्दा पहिले भानुभक्तको आध्यात्मिकता उनको रामायणमा देखिएको भएपनि यौवन धन र प्रभुता (हंकम) ले गर्दा

त्यो वैराग्य हीन थियो भन्ने बुझिन्छ । किन भने युवक भानुभक्त गाउँका धनी थिए भन्ने कुरा "मो भानुभक्त धनि भैकन आज यस्तो" भन्ने उनकै कवितावाट थाहा हुन्छ । धन भए पछि गरीव दुःखीहरू प्रति प्रभुता जम्नु पनि स्वाभाविकै छ । यसरी यौवन, धन र प्रभुताले यिनलाई थिचेको भएपनि विवेक शून्यताले धेरै थिच्न सकेन । किन भने यिनी संवेदन शील प्रतिभाशाली सहृदय कवि र सच्चा विद्वान् हुनाले यिनको हृदय धेरै पवित्र थियो र व्यावहारिक मायामा वांधिएर पनि लोक कल्याणकारी भावना राम्रो थियो । यो कुरा यिनका समाज कल्याणकारी कृतिहरूबाट प्रमाणित हुन्छ । अतः भानुभक्तको आध्यात्मिकता उमेर ढल्किई धनहीन भएको अवस्थामा विकसित भैसकेपछि वाँकी युद्ध र उत्तर काण्ड पनि लेखेर यिनले रामायण पूरा गरे । यस पछि प्रश्नोत्तरमालाको अनुवाद गरे । अनिमात्र संसार देखि पूर्ण विरक्त भई भक्तमाला लेखे । र अन्तमा रामायणको रामगीता पनि आफूले भनिदी छोरा रमानाथबाट लेखाएर यस संसारबाट विदाभई मोक्षगति पाए ।

जीवनमा यिनको आध्यात्मिकताले भौतिकतालाई आफ्नो आज्ञाकारी मित्र बनाई राखेको थियो । अतः एकाकी आध्यात्मिकताले यिनलाईः—

"स्वदेह मपि जीवोयं मुक्त्वा याति यमालयम् ।
स्त्री मातृ पितृ पुत्रादि संवन्धः केन हेतुना ॥
लोह दारु मयैः पाशैः पुमान् वद्धो त्रिमुच्यते ।
पुत्रदारमयैः पाशैः मुच्यते न कदाचन ॥

क्व धनं क्व सुता जाया क्व सुहृद् क्व च वान्धवाः ।
स्वकर्मोपार्जितं भोक्ता मूढ ! याहि चिरं पथि" ॥

—गरुड पुराण ।

"सुहृन्मित्रार्युदासीन मध्यस्थ द्वेष्य वन्धुषु ।
साधुष्वपि च पापेषु समवुद्धि र्विशिष्यते" ॥

—भगवद्गीता

माता पिता बन्धु बान्धव र प्यारो गरी पालिराखेको शरीरपनि अन्तमा काम लाग्दैनन् । एक्लै यमलोक जानुपर्छ । फलाम र काठले बनाएको पासोबाट बरू मुक्त हुन सकिएला तर स्त्री पुत्र आदिको मायामय पासोबाट मुक्त हुन सकिन्न र एक्लै यमलोक पुगेपछि ए मूर्ख जीव! तेरा धन, स्त्री, पुत्र पुत्री माता पिता मित्र बन्धुहरू आज कहाँ छन् ? तेरा साथी कोही भएनन् । अतः आफूले गरेको कर्मको भोग आफै गर्ने छिट छिटै हिड़ । भन्दै यमदूतहरूले हप्काउँछन् कुन् आदि र कुरा तथा प्रत्युपकारको भावना न लिए आफ्नू उपकारगर्ने सुहृत्, आफूमाथि स्नेह गर्ने मित्र, बिगार र अपमान गर्ने शत्रु, पक्ष विपक्ष कतै न लाग्ने मध्यस्थ—

आफूसित द्वेष गर्ने व्यक्ति, आफ्ना स्त्री पुत्र बन्धु बान्धव आदि, धर्मात्मा र पापी-यी सबैमा समान बुद्धि भएका कुनैपनि मनुष्य सांसारिक बन्धन चुंड़ाली मुक्त हुन सक्छन्; भने धनसंपत्ति गृह पत्नी पुत्र आदि सबैलाई त्यागिदिने सन्यासी पनि बनाउन सकेन ।

अनि आध्यात्मिकता हीन भौतिकताले—

"न स्वर्गो नैव जन्मा न्यदपि न नरको नाप्य धर्मो नधर्मः
कर्ता नैवास्य कश्चित् प्रभवति जगतो नैव भर्ता न हर्ता ॥
स्वदार परदारेषु यथेच्छं विहरेत् सदा ।
गुरु शिष्य प्रणालींच त्यजेत् स्वहित मा चरन् ॥
यावज्जीवेत् सुखं जीवेत् ऋणं कृत्वा घृतं पिवेत् ।
भस्मी भूतस्य देहस्य पुनरागमनं कुतः ॥
—वैभाषिकाद्भिः, चार्वाकाद्भिश्च नास्तिकः"

निरीश्वरता प्रतिपादक देहवादको प्रशंसा गर्दै न स्वर्ग छ, न नरक छ । न धर्म छ, न अधर्म छ । ईश्वर नामको न कुनै सृष्टिकर्ता छ, न पालक छ, न संहर्ता छ । तथा स्व-पत्नी र पर-पत्नीमा भेद-भाव न राखी सबैसित स्वच्छन्दता पूर्वक विषय-विहार गर र गुरु शिष्य प्रणालीलाई निर्थक भई परित्याग गर । एवं पाप पुण्यको झमेला तिर नलागि जे मन लाग्छ उही गर र पेट भर । यसरी नै स्वदेहको सुरक्षा गरी सुखी बन । किन भने भस्म भैसकेपछि पुनः यो शरीर पाइँदैन । आदि आदि

अनर्थकारी कुराहरू सुनाई अनाचार र अत्याचार आदि कुकर्मतिर पनि यिनलाई तान्न सकेन ।

अनि भौतिकतालाई आज्ञाकारी मित्र वनाउने आध्यात्मिकताले नै—

"न्यायार्जितधन स्तत्व-ज्ञाननिष्ठोऽ तिथिप्रियः ।
शास्त्रवित् सत्यवादी च गृहस्थोपि विमुच्यते ॥

—पराशर स्मृतिः ।

सर्वेषा माश्रमाणां च प्रधानः पुण्यवान् गृही ।
स्त्री-पुत्र-पौत्रयुक्तं च मन्दिरं तपसः फलम् ॥

—ब्रह्म वैवर्त पुराणम्

न्याय पूर्वक धन आर्जन गर्ने, अध्यात्मतत्वको ज्ञाता अ तथिमा पूर्ण श्रद्धा र प्रेम गर्ने सत्यवादी छ भने समुचित भौतिक सुख भोग गरी अन्तमा गृहस्थले पनि मोक्षगति प्राप्त गर्न सक्छ । धर्म कर्मले युक्त भएको गृहस्थाश्रम नै सबै आश्रममा प्रधान हो, भन्ने कल्याणमय कुरामा विश्वस्त पारी नेपाली भाषा, नेपालीसमाज नेपालराष्ट्र र परमेश्वरको विशुद्ध भक्त भएका कर्मयोगी गृहस्थ वनाइ दियो ।

यिनी सामाजिक समुत्थानमा निर्भीक सेवक र अध्यात्मशास्त्रका विशिष्ट विद्वान् हुनाले अध्यात्मरामायण र प्रश्नोत्तरीको अनुवदमा वर्णनात्मक विशिष्ट मौलकता, सरल संक्षिप्तता र आकर्षक कलात्मकतामात्र यिनका निजी सर्वस्वहुन् । तर उक्त दुवै ग्रन्थमा भएका आध्यात्मिक र सामाजिक विषय वस्तुहरू पार्वती पति देवाधिदेव महादेव र जगद्-गुरु शंकराचार्यका हुनाले यी ग्रन्थ रत्नका आनुवादिक उदाहरण प्रस्तुत गरी यिनलाई महादेव र शंकराचार्य वनाइ दिनु समुचित हुने छैन । वरू रामायणमा वर्णित-गुरु प्रति शिष्यको र शिष्य प्रति गुरुको, पत्नी प्रति पतिको र पति प्रति पत्नीको, पिता प्रति पुत्रको र पुत्र प्रति पिताको, वन्धुहरू प्रति वन्धुहरूको, मालिक प्रति सेवकको र सेवक प्रति मालिकको, प्रजा प्रति राजाको र राजा प्रति प्रजाको पारस्परिक स्नेह र ममतामय महत्वपूर्ण सामाजिकता र यसै रामायणमा वर्णित :—

"भ्यागुतो खाँ भनि खोज्छ डाँस्, मुखविषे साँप्ले धऱ्याको पनी ।
तस्तै भोग् गरुँला भनेर मनले भन्छन् दुनियाँ पनी ।

क्याको रस् छ यहाँ विचार मनले काल् सर्पको मुख् परी ।
क्या होला वन जाउँला इ सबलाई आनन्द राखुन् हरी ।।"

(क्रुद्ध लक्ष्मण प्रति राम)

"जीवै हो पति भन्दछ्यौ पनि भन्या मर्दैन जिव् ता कहीं ।
देहै हो पति भन्दछ्यौ त किन शोक् गर्छ्यौं छ ऊ ता यहीं ।।
मता नित्यै पो हूँ यहि शरिरमा लागि म गयाँ ।
शरिर् मर्दा आफै मइँ मरिगया भैं पनि भयाँ ।
अहो अज्ञान् मेरो भनिकन जहाँतक् मनमहाँ ।
लिंदैनन् ताहाँ तक् फजिति पनि छन् यै जन महाँ ।।"

(शोकसन्तप्त तारा प्रति राम)

जो यो 'तत्वमसी' छ वाक्य उसको वाक्यार्थ जानी लिनू ।
यस्मा तिन् पद छन् ति तीन पदका तात्पर्यमा मन् दिनू ।।
तत्को अर्थ परात्म हुन् ति पदमा त्वं भन्नु जीवात्म हो ।
इन्को ऐक्य बुझाउन्या असि छ पद् रात्दिन् विचार् गर्नु यो ।।"

(जिज्ञासु लक्ष्मण प्रति राम)

आदि आदि अध्यात्म विषयक विशिष्ट उपदेशमा आधारित अध्यात्मिकता,

तथा प्रश्नोत्तर मालामा वर्णित :—

"मृत्यू भन्याको चिज आज कुन् हो ।
औजस् भन्याको तिमी जान जुन् हो ।।
कुन् शिष्यहो शिष्य भनेर मान्नू ।
जुन् गर्छ सेवा उहिं शिष्य मान्नू ।।
कुन् हो सवैको गुरु भन्नु पर्न्या ।
जो हो हितैको उपदेश गर्न्या ।।
कुन् सत्यहो सत्य कसोरि जान्नु ।
जुन् प्राणीको हित् छ उ सत्य मान्नू ।
सव् व्रतहरूमा व्रत मुख्य कुन् हो ।
सव् देखि सानू मछु भन्नु जुन् हो ।।

कस्लाइ लाटो छ भनेर भन्छन् ।
जो ता वखत्मा पनि चुप् रहन्छन् ॥
कुन हो पशू तुल्य भनी कह्याको ।
विद्या नभै मूर्ख पडी रह्याको ॥

कौनै वखत्मा पनि के नगर्नू । पाप्मा अगाडि कहिले नसर्नु ॥
ज्यूँदै मर्‍योको भनि नाम् त कस्को । उद्योग्विना वित्तछ काल जस्को ॥
कुन ज्वर् छ चिन्ता ज्वरतुल्य मान्या । छोटो कउन् हो नलजाइ माग्न्या ॥
भूषण् छ कुन् सज्जनले कह्याको । शीलै छ भूषण् वहुतै वन्याको ॥

कुन् हो जगत्को गहना वन्याको । विद्यै छ सव्का गहना वन्याको ॥
वाण् तुल्य कुन्हो अतिदुःख दीन्या । जुन् मूर्खता हो उही जानिलीन्या ॥
कुन हो जतीजति दियो उति वढ्न जान्या । विद्यै रहे छ भनि निश्चय तेहि मान्या ॥

आदि आदि महत्व पूर्ण समाजिकता र यसैमा वर्णितः—

कस्लाइ हो शत्रु भनेर जान्नू । आफ्ना दशै इन्द्रिय शत्रु मान्नू ॥
कस्लाइ खुप् मित्र भनेर मान्नू । जीत्या यिनै इन्द्रिय मित्र जान्नू ॥
कुन् मूल ढोका छ नरक् कि नारी । तान्छन् नरक्‌मोह ठूलो फिंजारी ॥
मुक्ती भन्याको त पदार्थ कुन् हो । वैराग्य भन्नु चिज मान्नु जुन् हो ॥

ठूलो नरक् कुन्छ भनेर मान्नू । येही शरीरै छ भनेर जान्नू ॥
कुन् शत्रु हुन खुव् वलवान् भयाका । कामादि हुन् सव् नरले कह्याका ॥
कुन्वीज जानिकन चिज् रहदैन जान्नू । त्यो चीज नित्य परमेश्वरलाई जान्नू ॥
कुन् दुःखको मूल भनेर जान्नू । मेरा महूँ भन्नूछ तेहि मान्नू ॥

प्रणान्तका समयमा कति कर्म गार्नूं। संपूर्ण छोडि रघुनाथ् तिर
चित्त धनूं ॥
कुन् शत्रु हुन् अघि त मित्र सरी रह्याका। पुत्रादि हुन् सकल सज्जनले
कह्याका ॥
कुन् चिज् छ चञ्चल यहाँ क्षण एक् घडीको। आयुष्य यौवन वुझ्या
विजली सरीको ॥

आदि आदि आध्यात्मिकता समेतले यिनको समाजिकता र आध्यात्मिकता-
लाई उत्तरोत्तर विकसित पार्दै लगे। अनि यिनका निजी विषय वस्तु भएको
मौलिक 'भक्तमाला'मा आएपछि वेदसिद्ध विशुद्ध हिन्दू धर्ममा आधारित यिनको
आध्यात्मिकताले वैराग्य युक्तभई पूर्णता पाएको छ।

यसरी विकसित भएर सांसारिक मायाजालमय स्त्री, पुत्र, धन, परिजन
आदिको प्रवल वन्धनवाट मुक्तिपाई मोक्षगतिको आदर्श अधिकारी वन्न :—

प्रतिज्ञा मैले यो यम सित गर्याँ जन्मि अवता।
सिताराम् भजन्याछू विषयहरुमा छाडि ममता॥
प्रतिज्ञा सो विर्सीकन धनजनै खोजि डुलियो।
सिताराम् भजन्या हो शिव ! शिब ! यसै आज भुलियो ॥१॥

सिताराम् भजन्या छू भनिकन प्रतिज्ञा अघि गरी।
गयाको होस् आइस् कतिदिन भजिस् भन् अघिसरी।
यसो भन्नन् स्वामित् ! म कन यमराज् त्यस् वखतमा।
कसो भन्नू मैले भुलिकन रह्याँ यस् वखतमा ॥२॥

गयो वालक् कालको वय पनि यसै वाल-रसले।
यसै रित्ले यौवन् पनि वितिगयो मोहवसले॥
भयो वृद्धावस्था अझ पनि भजींदैन मनले।
कसो गर्नन् स्वमित् ! मकन यमका दूतहरूले ॥३॥

"मरणका वेलामा हरि विनु त क्या भर् छ अरूको ।
शरण् लेला सो नाथ् अधिपति अजामीलहरूको ॥"
"बुझ्याँ मैले सब्को रिपु सरि रह्याको पनि भनै ।"
"विचार् गर्छू क्यारूं मन पनि त्रलैले हरिलिन्या ॥४॥

दशेन्द्री डाँकूले विचविच पसी दुख् पनि दिन्या ।"
जगत्मा पृथ्वीका अधिपति बड़ दौलथि थिया ।
मरणका वेलामा वुझिलिनु ति क्या लीकन गया ॥"
घट्यो आयू मेरो विषय अझ खोज्दैछ मनले ।"

आदि आदि वैराग्य पूर्ण भक्ति अघि सारी आफूले आफूलाई ठूलो भूल गरिस् भनी पश्चात्ताप गर्दै अखिल ब्रह्माण्डका कर्ता-धर्ता र हर्ता, आद्यन्त रहित, अनिर्वचनीय, सत्य सनातन, दयासागर तथा भक्त वत्सल परम पिता परमेश्वरमा उनकै अभिन्न अंश भएको, तर शरीरधारी जीवात्म-रूप आफूलाई त्वमेव शरणं भनी समर्पित गरि दिएका छन् ।

यसले गर्दा अन्तमा अत्यन्त जटिल आध्यात्मिक सिद्धान्तले भरिएको राम-गीताको अनुवाद सर्व साधारणले पनि बुझ्न सक्ने गरी थिनले गर्न सके । अनि यिनको आध्यात्मिकताले प्रिय पत्नी पार्वती र प्रिय पुत्र गणेशसित रमाउने देवाधि-देव महादेव झैं यिनीलाई पनि प्रिय पत्नी रेवती र प्रिय पुत्र रमानाथ सित रमाउने वनाइ दिएको थियो । यसैले यस अवस्थामा थिनीले राजर्षि जनक जस्तै जीवन्मुक्त सद् गृहस्थ वन्दै अन्तमा शरीर छाड़ी श्रीराम गीतामा प्रतिपादित स्व-स्वरूपै परमात्मामा विलीन भई अति दुर्लभ पनि मोक्ष गति सजिलैसित प्राप्त गरे ।

यस्ता महान् विभूतिलाई तुच्छै भए पनि हार्दिक कृतज्ञता अघि सारी यो एक श्रद्धाञ्जलि समर्पण गरेको छु । आफूले तिर्नु पर्ने उनको ऋणको वार्षिक ब्याजसम्म यसले तिरिन्छ कि भन्ने आशा छ । जय भानु ! जय नेपाल !

आए. आर. डिग्री कलेज, जनकपुरधाम ।

●●

# भानुका केही सूक्ति-माधुर्यः-

—रोहिणी वल्लभ शर्मा

कुनै व्यक्ति विशेषको गुण परम्परा त्यति सरस र प्रभावोत्पादक हुन्न, जति साहित्यिक भाषाका परिपाकको हुन्छ। उसको सर्वोपरि आस्था सत्य-शिव-सुन्दर तत्व नै हो, जो स्वतन्त्रताको अनुसरण गर्छ र अनुभूति गम्य द्रुतिमय धारा सँगसँगै सल्बलाएर परमानन्द तथा लोक-कल्याणको नयाँ-नयाँ चिर-स्थायी भावुक चेतनाहरू सिर्जि रहन्छ। प्रतिभा सम्पन्न कुशल हृदय उद्वेलित भएर रसाइ आएका संवेदनशील चेतनाका स्रोतहरू मानवीय भाव-भूमिमा उत्साह-हर्ष-आनन्द-सामाजिक-सापेक्षता र चिन्तनात्मक प्रवृत्तिका कोमल बिरूवाहरूलाई सिक्त गरी रहेका हुन्छन्। त्यो स्रोत प्रवाह सँधै नयाँ नै भासित हुन्छ। यो चिर नवीनता नै अमर साहित्यको दिव्य-स्वरूप हो, त्यसको सम सामयिक प्रभाव अनुपम लावण्य (मनोहारितत्व) सुधामय सूक्ति हो भन्नुमा शायद मत-भेद हवोइन होला।

जव जव कवि हृदय नश्वर दृश्य विश्वको सम वा विषम परिस्थितिमा गोता लिन्छ गोता खान्छ, अनि त्यस भित्र आफुले लिएका र पाएका-जो अनुभवले मात्र वेद्य चैतन्य तथ्य छ-लाई विचार-मञ्चमा लामृ सुस्केरा द्वारा समाजलाई सजिलो उद्बोधन दिन अभिनय गर्न अगिसर्न खोज्छ, त्यस वेलाको अन्तर्भाव प्रदर्शन र चैतन्य दर्शनको माध्यम नै सूक्ति तत्व बनिन्छ भन्नु पनि असंगत बुझिन्न होला।

यै धारणा परम्परामा हाम्रा विभूति कवि भानुभक्त पनि द्वन्द्वात्मक गति-विधिले प्रेरित भएर नै आफ्नु सुषुप्तावस्थाको प्रतिभालाई व्युँझाई काव्यात्मकताको विहानीमा भाषा दर्शनको पद्धति छर्लङ्ग्याउन अग्रसर र सक्षम वनिएका प्रतीत हुन्छन्। क्रौंची चरीको करुण चीँचीँले महर्षि वाल्मीकिका मुखवाट प्रथम कविताको मूल फुटेझैं घाँसीसंगको वार्तालापवाट यिनको हृदयमा अमर कीर्ति राख्ने प्रवल प्रेरणाको प्रस्फुरण हुन्छ अनि भानु भन्दछन् —

यस् घाँसिले कसरि आज दिएछ अर्ती ।
धिक्कार हो मकन बस्नु न राखि कीर्ति ॥

क्रम र शृङ्खला पुरानै भए पनि आफ्ना अनिर्वचनीय अनुभूति र चिन्तनका पृष्ठ-भूमिमा मौलिकताको बीज छर्दै सामाजिक मान्यता र परम्परालाई विशृंखलित हुन न दिई महर्षि व्यासका अठार पुराणको सार-तत्त्व "परोपकारः पुण्याय" लाई नै मानौं एक मात्र लक्ष्य बनाई भानु रामायण प्रारम्भ गर्दछन् । यो तथ्य उनको पहिलो पदमा नै यसरी व्यक्त भएको छ —

एक् दिन् नारद सत्यलोक् पुगिगया लोक्को गरूँ हित् भनी ।

'रामायण' लोक कल्याणको धारणाले नै तर्जुमा भएको छ र यिनै धारणा र भावनाहरू उनका अरू कृतिहरूमा पनि यत्रतत्र छरिएर बसेको पाइन्छ ।

अविकारी पर-ब्रह्म-तत्त्व नै मर्यादामय मानवीय कर्तव्यको आदर्श दर्शाउन मानिस भएर बिकारी अवस्थामा लीला गरी शिक्षा स्रोत रसाउँछन् भन्ने तथ्यलाई पष्ट्याउन भानुले आफ्ना चिन्तन-धारामा उर्लिएका श्रद्धा-लहरीलाई यस प्रकार छचल्काएका छन् —

राम् हुन् परात्मा ति कहाँ विकारी ।
यस् लोकमा छन् नर रूप धारी ॥
काम् गर्न लाग्या ति नरै सरीका ।
लीला अपार् छन् भगवान् हरीका ॥

पिनाक धनु टुक्रिए पछि राजर्षि जनकले आफ्नी छोरी जानकीको विवाहोत्सवको लागि जुन सु-शोभनको व्यवस्था गरेका थिए, त्यसको सजीव चित्रणबाट कवि भानुले नेपाली संस्कृतिमा विवाहोत्सवको रूप रेखा र राजर्षि जनकको र उनको राजधानी जनकपुरको ऐश्वर्यको वर्णन थोरै शब्दमा छल्किने गरी यस प्रकार प्रस्तुत गरेका छन् —

सुन्दर् लग्न खटून गर्‍या जनकले मङ्गल सहर् मा चल्या ।
नाच् कीर्तन् सितका प्रकाश्कन हुन्या रात्मा चिराग् खुब् बल्या ॥

जो मण्डप् छ विवाहको तस उपर् झुम्का हिराका झुल्या ।
मूँगा मोति जुहार् जनक्-पुर महाँ घर् घर् सबैका झुल्या ॥

श्री रामचन्द्रको शुभ यौवराज्याभिषेकमा कुनै किसिमको विघ्न-बाधा न परोस् भनी रानी कौशल्या लक्ष्मी र दुर्गा देवीको पुजा गर्दथिन् । अर्कातिर सौताहरू आफ्नो स्वार्थ साधनका लागि यस महोत्सवलाई बिथोल्न तयार हुन्छन् । यस स्थितिका उपक्रममा कविले सामाजिक हितलाई सुलुक्क निल्न तत्पर रही रहने स्वार्थान्ध प्राणीको प्रतिक्रिया मार्मिक व्यञ्जनाका स्वारस्यले बडो बोधगम्य पारी यसरी प्रस्तुत गरेका छन्—

राजाले त व्रतम् गऱ्या दिन भनी कथा गर्दछिन् कैकयी ।
यसमा विघ्न कदापि पर्न नदिउन् लक्ष्मी र दुर्गा भई ॥
कौशल्या पनि यो विचार् गरि तहाँ गर्थिन् पुजा देवीको ।
सौताका मनसा भने ठहरियो काम् विघ्न गर्नू निको ॥

रामको वनवास र भरतको राज्य यी दुई काम रुँगाल्न दुष्टमति मन्थराको युक्ति प्रदर्शनले आश्वस्त भई मलिन वेश-भूषामा क्रुद्ध-स्थितिको परिवेश अँगालेको सरल हृदया कैकेयीका विचार परिवर्तनलाई भावुक हृदयले संगतिको दुष्परिणति औंल्याउन संस्कृतको--

धीरोऽत्यन्तदयान्वितोऽपि सगुणाचारान्वितो वाऽथवा
नीतिज्ञो विधिवाददेशिकपरो विद्याविवेकोऽथवा ।
दुष्टाना मतिपापभावितधियां सङ्गं सदा चेद्व्रजेत्
तद्बुद्ध्या परि भावितो व्रजति तत्साम्यं क्रमेण स्फुटम् ॥

यो त लामो विश्लेषणलाई—

सज्जन् वेस् सुमती पनी कुमतिका सङ्ले त बिग्री गयो ।

यसरी आफ्नु मौलिक रूप दिएका छ ।

सौतेनी आमाको हठ पूर्ण आग्रहले वचन बद्ध पिताज्यूको विवशता गमेर उदात्त मुद्रामा वन जान तत्पर भै अनुमति चाहने मर्यादा पुरुष राम "खुसीले काख-

मा लीकन जव भनिन्—खाउ कछु भनी" भन्ने माता कौशल्याको मातृ वात्सल्यलाई सादर अस्वीकार गर्दै कोमल मातृ-हृदयमा सकभर आघात न हुने शब्दमा यसरी विनम्र अनुरोध गर्नु हुन्छ ।

"गयो खान्या वेला मकन त मिल्यो राज्य वनको ।
भरतले राज् पाया यहिं वसि गरुन् राज्य जनको ॥
विदा वक्स्या जावस् खुसि सित म जान्या छु वनमा ।
म चाँडै फिर्न्या छू विरह न हवस् कत्ति मनमा ॥

यस प्रसङ्गमा संयोग-वियोग हर्ष-विषाद, सुख-दुःख आदि द्वन्द्वात्मक परिधिमा उद्विग्न न भै एक रूपता अँगालेर सौम्य प्रवृत्ति सिर्जना गर्ने विचार-धारामा महापुरुषता निहित छ भने तथ्य व्यञ्जित हुन अ एको छ ।

विपरीत घटना क्रमले अमर्षवश क्रुद्ध भाइ लक्ष्मणलाई कोमल भाकामा—

सुन्यौ भाइ ! संसार मा शरिर अति कच्चा छ जनको
शरिर् कच्चा जानी न गर तिमि रिस् कत्ति मनको ।
सवै भोग् चञ्चल् छन् विजुली सरि एक छिन् न रहन्या
विचार् यस्तो जानी सहु तिमि बडो हुन्छ सहन्या ॥

भनी दृश्य विश्वका भौतिक परम्पराको वास्तविकता प्रस्तुत गरेर शाश्वत स्थितिको उपलब्धि छर्लङ्ग्याउन भानुका मनस्वी रामले असहिष्णुता अधः पतनको सोपान र क्षमा शीलता अभ्युदयको निकाय हो भन्ने तत्त्व दर्शाउनु भएको छ ।

जन समुदायको सुख सुविधा कायम राख्नका लागि आफुने संघर्षमय जीवन अंगाल्नु नै स्तुत्य कर्म हो । मनुष्य कालको यौटा गाँस मात्र हो । आफू कालको वशमा रहेको कुरा जानी-जानी पनि मानिस तेरो-मेरोको प्रपञ्चमा लठारिई आफ्नो मात्र सुख हेर्न चाहन्छन् , जो यथार्थमा कसैलाइ पनि उपलब्ध हुन सक्तैन । अतः यस्तो अलभ्य वस्तुका निमित्त व्यर्थमा जीवनको बहुमूल्य समय खेर फाल्न पटि नलागि सन्तोष सँगालेर चिर-कल्याणको बाटो "बहुजन हिताय" मा लाग्नु राम्रो हो भन्ने रामका सदिच्छाको अभिव्यक्ति भानुका शब्दमा यसरी फुटिएको छ-

थ्याग्लो खाँ भनि खोज्छ डाँस् मुख विषे साँप्ले धर्याको पनि
तस्तै भोग् गरूँला भनेर मनले भन्छन् दुनियाँ पनी।
क्याको रस् छ् यहाँ विचार मनले काल् सर्पका मुख् परी
क्या होला वन जाउँला यि सवलाइ आनन्द राखुन् हरी॥

जटाधारी भई रुख मुनि कुश ओछयाएर सुत्नु परेका कोमल कान्त काय राजकुमार रामको करुण चित्रमा कैकेयी प्रति क्षोभ व्यक्त गर्ने निषाद-राजलाई शान्तिको मार्ग अंगालेका लक्ष्मणजीको भाकामा ईर्ष्या विपत्तिको मुहान र तितिक्षा अनन्त सौख्यको निधान हो, यो संभी परिवर्तनशील संसारमा आइलागेका जस्तो सुकै परिस्थिति सँग पनि धैर्यपूर्वक मुकाविला गर्नु पर्छ। यसैले शाश्वत श्रेय प्रदान गर्छ भन्ने तथ्यलाई भानुले यसरी व्यक्त गराएका छन्।

धीरा भै रहनू विपत्ति सहनू कस्तै परून् ता पनी।
कैल्है मोहविषे नपर्नु जनले माया छ संसार् भनी॥

ऐश्वर्यपूर्ण राजदरवारको अक्षय वैभव, प्रभुत्व तथा परिजन सँगका आमोद-प्रमोदको स्वच्छन्द वातावरणमा हुर्कने कामुक-प्रवृत्ति मर्यादाको पुरश्चरणमा उदार दास्य-भाव अपनाउँदा कुण्ठित हुन्छ। महामना लक्ष्मण "दास् हूँ भता म सित कुन् सुख मिल्छ यहाँ" को अभिव्यक्तिले आफ्नो अनुपम बन्धुत्वको भावना पख्याउँछन् र "वृद्धी रहेन छ बहुत् रहिहस् तँ कछा" भन्दै शूर्पणखाको वासनामूलक उच्छृङ्खल व्यञ्जनालाई परम-सुख प्राप्तिका लागि विवेकको आश्रय लिन औंल्याउँछन्।

आत्म-बलको भरोसा लिनेनै सबैमा प्रबल गनिन्छ, त्यो नै विश्वविजेता हुन सक्छ। अरूको आड भरोसा गरेर विरोध बेसाउनेको कहिल्यै भलो हुँदैन। "यो सुर् लिया कुल समेत् तिमि आज मर्छौं" ले ज्यानको माया मार्ने मारीच मैंमत्तो रावणलाई शान्त गराउने चेष्टा गर्छ।

यो संसार अदृश्य र अपरिच्छेद्य शक्तिको आभासले प्रकाशित छ र तदनुसार नै यसको स्थिति वैचित्र्य हुन्छ। अध्यात्म तत्वको मूल स्रोत यसै धारणामा

प्रवाहित छ। ईर्ष्या द्वेषको परिधिमा उब्जने प्रतिक्रियात्मक भावनाले त्यसको प्रभाव पछि पर्दैन। चोट पाएर चेत आएको मारीच "जो गर्दछन् प्रभु गरुन् छ लीला उनैको, चल्दैन जोर् प्रभु विषे अरु ता कुनैको" भनी रावणको प्रतिहिंसात्मक प्रवृतिलाई रोक्ने असफल प्रयास सँगाल्द छ।

संकुचित मनः-स्थितिले श्रद्धापूर्ण आस्थामा अड़िलो भावनालाई पनि अनुदार ठान्दछ। विशेष गरेर यो धारणा-परम्परा स्त्री जातिमा स्वभावतः अधिक रहन्छ। भानुले यस मनोवैज्ञानिक प्रभावलाई मारीचको छल-पूर्ण क्रन्दनमा इष्ट-नाशको आशङ्काले उद्विग्ना जानकीको भावना "भजली मलाइ भनि भन्छ कि आज याहाँ" मा झलकाएकाछन्।

निर्मल प्रेम-तत्त्व विशद्ध मानसमा छचल्किन्छ। विचार पवित्रता नै सात्त्विक प्रवृतिको परिपाक पनि हो। यसका सामु अलिकति पनि प्रतिकूल गतिविधि देखा पर्‍यो भने त्यो सरल हृदयले अनन्य श्रद्धालु सहयोगी एवं सहानुभूति लिनेलाई पनि "तिम्रो त चित्त अति दुष्ट रहे छ जान्यौं, काम् देखि आज तिमी-लाइ अति शत्रु मान्यौं" भन्न बेर लाउँदैन।

अहमत्याईंमा मा त्यदा जस्ता सुकेको पनि कर्तव्य बुद्धि मासिन्छ, द्रह-बुद्धि मौलिन्छ, प्रज्ञा-चक्षुमा फुलो पर्छ र परिणति ठम्याउन सक्दैन। सत्यको अपरि-हार्य प्रतिक्रियालाई पनि हियाएर "मुक्का खवाइ लछारियो त पनि फेर् फर्क्यो भगुवा बनी" भन्दै तम्सिने गर्छ।

निरङ्कुश मनः—स्थितिमा लट्टिदा अजर अमर पनि जीवात्मा देह प्राप्तिको सिलसिलामा पर्छ र जन्म मृत्युको अटूट दुख परम्परामा भौंतारिन पुग्छ। शरीरको प्रारम्भिक अवस्था देखि अन्त्य अवस्था सम्म कहीं पनि सुखको मात्रा छैन, सुखको आभासमा पनि कुनै न कुनै कटु अनुभूति भै नै रहेको हुन्छ। शरीर नै दुरन्त दुःखको आश्रय हो शारीरिक प्रवृतिको विलय नै परम सुख हो। यो आध्यात्मिक पक्ष "जहाँ देह छ ताँहि दुःख छ" ले छर्लङ्ग्याउन सम्मातिने देह-त्याग गरेको देखाइएको छ।

विवेक आत्म-बललाई पुष्टयाउँछ। आत्म-बलमा भरोसा गर्ने कहिले पनि पछारिन्न, संयोगवश पछारिए जस्तो भए पनि द्वन्द्वात्मक प्रतिक्रिया भित्रको कटु अनुभव सँगाल्दै रहन्छ र आसुरी (हिंसक) प्रवृत्तिका क्षुद्रताको उपेक्षा गर्छ। ब्रह्म-पाशमा बाँधिएका हनुमान् निर्भीक देखिन्छन् र ओइरिएका घात-प्रति घातलाई "रिस् फेर्छन् भुसना" भन्ने धारणा लिन्छन्।

काम-क्रोध-लोभ-मोह-मद मात्सर्य यी मानवीय अभ्युदयका प्रतिरोधी हुन्। यी छवटैलाई थिचन सक्ने क्षमता भएकालाई "महात्मा" या 'महापुरुष" मान्ने श्रुति-सम्मत छ। त्यस अवस्थामा ममत्व र परत्व हुँदैन। विशुद्ध अनुरक्तिलाई नै मूल्यवान् सम्झिने परम्परा फस्टिन्छ। परम वैरी रावणको अनुज विभीषणलाई अपनाउँदा "लिन्छु शरण् यदि उ शत्रु हवस् दयेले, मेरो ब्रतै छ यहि छोड्छु कसोरि अैले" को अभिव्यक्ति त्यो व्यक्तित्वको परम ज्योति हो।

आफ्नु क्षमताको ख्याल गरी औसर विचारेर उपयोग गरिन्छ भने साधारण साधनबाट पनि सफलता पाइन्छ, प्रतिष्ठा पनि अडिन्छ। बौद्धिक परिपाकले नै यो क्षमता प्रदान गर्छ। चाञ्चल्य, उपहास र असफलताको रङ्ग शाला हो। अमोघ ब्रह्मास्त्रको प्रयोगले पनि रामका अगाडि इन्द्रजित् अडिन सक्तैन, बेपत्ता भै भाग्छ र कच्चाको उपाधि पाउँछ "यो बच्चा पनि जोरि खोज्न सकनै चाहन्छ कच्चा भनी"।

हुन त सत्प्रयास र कर्तव्य-निष्ठाले कुनै पनि कामलाई सफलता सम्म पुर्याई दिन्छ। तर पनि स्वार्थका अन्तर्द्वन्द्वमा सामाजिक स्थिति र लोक-कल्याणको भावुक प्रवृत्तिलाई खलबलाउन खोज्ने खालको त्यो निष्ठाले पूर्णत्व पाउन सक्तैन प्रत्युत प्रति स्पर्द्धालाई पुष्टयाउँछ। अन्तर्लीन आत्माको मूक—धारणा "परोपकार" को संकेत गरी रहेको हुन्छ, सांस्कृतिक परम्पराको अदृश्य स्रोतमा प्रवाहित त्यो आलोकमय चिति-तत्वको लक्ष्य स्थूलबुद्धिले गम्न पनि सक्तैन, फलतः दुश्चिन्तनाको क्रमिक घटना-वश घात-प्रतिघातको निविड तममा अन्योलिएर भौंतारिन पुग्छ। जगन्नियामक यो सूक्ष्म प्रभाव नै "ईश्वर" पदले सम्मानित छ र प्राणिमात्रको विध्वंसात्मक प्रवृत्तिको नियन्त्रण गरी रहन्छ। कुम्भकर्ण वीरको छः मैन्हाको निन्द्रा र एक दिनका व्युँझाइको परिणति--"इच्छा ईश्वरको रहेछ वल वान्" ले नै झल्झल्याएको छ।

धीर, वीर र उत्साहीहरूको आचरण प्रक्रियामा झिल्केको सौहार्द पूर्ण प्रतिभाको झिल्को नै त्यसमा मान्यताको जलप जडदछ र शाश्वत सत्यको परिपाक भएर अडालु बन्दछ। यै अवस्थाको आस्था लोक-सम्मतिको कसी मानिएको हुन्छ भन्ने सत्यतालाई स्पष्ट गर्न अग्नि-परीक्षामा सफलता पाएकी जानकीको चरित्रमा पनि समाजले लगाएको खोटको वर्णन शब्द र अर्थका संयोगको औचित्यले शाश्वत सत्यको चहकमा उपदेशात्मक छटाले समाज गत प्रतिक्रिया यसरी छर्लङ्गिएको छ—

"यस्ती स्त्री पनि चोखि हो भनि यहाँ राजै त राख्छन् भन्या।
चोखी कुन् रहली यहाँ अब उपर् सम्पूर्ण वेश्यै बन्या॥"

क्षमा शीलतालाई परमार्थ-तत्त्वको मूल न सम्झी प्रतिवादमा अल्मलियो भने प्रतिष्ठाको अस्तित्व मेटिन्छ, व्यक्तित्व छर्लङ्गिन्न। त्यसैले मनस्वीहरू सामर्थ्यका भरमा यस्तो पतनोन्मुख प्रवृत्तिमा लागेका देखिदैनन्। बरू आफ्ना क्रिया-कलापमा वैमत्य आउने खालका गलत लोक-भावनालाई जरै समेत उखेलन उत्पीडन बेसाउन पनि हच्किदेनन् र जस्तो सुकै पनि कष्ट सहन तत्पर देखिन्छन्। यसैले उनीहरूको व्यक्तित्वलाई ओजस्वी र यशस्वी बनाइ दिएको हुन्छ "चोखा जानी छिदाँ त दयैश बहुत् लोकले मलाई गर्‍यो" भन्दै अन्तर्वेदनाको पृष्ठभूमिमा आत्म-शुद्धिको तत्त्व पहिल्याउन भानुका राम द्वन्द्वाभिभूत भैं हुन्छन्।

उग्रताको भीषण प्रदर्शनीमा न पसुन्जेल कसैको पनि धैर्य, औदार्य र साहसको मूल्याङ्कन हुदैन, न त उसको मुटुका स्पन्दनको स्वर-लहरी छचल्किएर विश्व-मञ्चलाई रसाउन र सुस्थिरताको परिचय दिन समर्थ नै हुन्छ। विषम स्थितिमा पनि शिवात्म-तत्वको सौरभ फिजाई दूषित वातावरण चोख्याउने धीरोदात्त महिमा त्यसै बेला छर्लङ्गिन्छ र समष्टिका हितको संपोषणमा आफू मेटिने अवस्थालाई पनि नगण्य गम्ने प्रतिभा ब्युझिन्छ। दुर्वासाको उत्कट आदेशका सामु लक्ष्मणजीको "कुल्को नाश् न हवस् कुशल् सब रहुन् क्या हुन्छ मं एक् मर्‍या" यो उदार आशयमा पुनीत दूरदर्शिता तथा परम सौहार्द भावनाको अनुकरणीय दर्शन देखा पर्दछ।

समय स्वार्थी हुन्न न त ऊ कसैको मुलाहिजामा अडिएर प्रतीक्षा गर्न पट्टि लाग्छ। प्राणीका उप-क्रममा सुनौला क्षणको मरीकुच्चे भारी बोकेर निरन्तर

अगि-अगि लम्किँदै रहन्छ, कहिल्यै पछिल्तिर हेर्दैन, लम्केको लम्क्यै हुन्छ। चतुर मनुष्य नै यसको महत्व गम्छन् र आफ्ना जीवनको प्रत्येक क्षणमा त्यसको अमूल्य प्रभाव संगाल्ने यत्न गर्छन्। त्यस्ता अध्यवसायी प्राणीको प्रयास सफल र व्यवहार परम्परा पनि सुव्यवस्थित तथा सुखद बन्दछ। जीवनमा समयको सही मूल्याङ्कन भएन र सदुपयोग गर्ने क्षमता भएन भने पछि दुःस्थिति र पछुतो बाहेक अरू केही उपलब्धि रहन्न। यो सैद्धान्तिक पक्षलाई भानु आफ्नो सरस शैलीमा यसरी पट्याउँछन्—"घर चतरत्रि गर्छन् बुद्धिमान्ले अगाडि, बखत चुकि दिदामा हुन्छ हानी पछाडी"।

वात्सल्यको अविरल धारामा सृष्टिक्रम सरस पारी लौकिक आचार र व्यवहारको बगैंचा ढकमक्क पार्ने नारी-जातिको भूमिका अति महत्वपूर्ण छ र सामाजिक जीवनको आनन्दमय भविष्य पनि उनीहरूको समन्वयात्मक विचार तथा सौशील्यको विशद वैशिष्ट्यमा नै आश्रय लिन्छ। पारिवारिक प्रक्रियाको विशिष्ट साधनका रूपमा महिला वर्गको गृहिणी अवस्था अपेक्षाकृत अत्यन्त श्रद्धेय—स्थितिको भएर नै हिन्दू संस्कृतिले-"यत्र नार्यस्तु पूज्यन्ते रमन्ते तत्र देवताः" भनेर नारी-तत्त्वको उदार आदर गरेको छ। यसै तथ्यमा दया-माया मैत्री-प्रणय-सुख-सुविधा आदिको सामञ्जस्यमा शाश्वत शान्तिको मार्ग औंल्याउने पुनीत गृहस्थाश्रमको संचालन पनि नारीहरूबाट भै आएको बुझिन्छ।

हिन्दू-दर्शनमा औदार्य अतिथि-सत्कार जस्ता परम कर्तव्यको महत्व सर्वोपरि रहेको कुरा भानुले वधू-शिक्षाको क्रममा यसरी—

"दिन दिन घरमा जो पाहुना वस्न आया।
तिनकन न खिलाइ आफुले क्यै न खाया॥
गृहिणि भइ रह्याको यो ठुलो धर्म जान्नु।
विहक सकि दियाको अन्न भन्न्या न ठान्नु॥" प्रस्तुत गरेका छन्।

नश्वर विश्वको क्षणिक विषय वासनामा मुग्ध भएर चिदानन्द-घन ईश्वरीय तत्वको विचारणामा नलाग्दा जीवनको अन्तिम अवस्थामा ठूलो पश्चात्त परि ग्लानिको गहन भार वहन गर्नु पर्ने हुन्छ। मानव-योनि पाएर पनि जन्म-मृत्युको परिधि बाट बाहिर निस्कने र ज्योति स्वतत्वमा लीन गराउने आचरण नगर्नेलाई "आत्मघाती" मानिएको छ—

"नृदेह माद्यं सुलभं सुदुर्लभं प्लवं सुकल्पं गुरुकर्णधारम् ।
मयाऽनुकूलेन नभस्वतेरितं पुमान् भवाब्धिं न तरेत् स आत्महा ॥"

'श्रीमद्भागवत'

यस स्थितिमा अवस्था-क्रमको प्रवृत्तिमा लट्टिएर पारमार्थिक विषय-वस्तु पट्टि न लाग्दा आइ लाग्ने आत्म संवेदनालाई आफ्नो मौलिक तथा सरस मार्मिक शब्द भएको भक्त मालामा भानु यसरी उद्विग्न देखिएका छन्—

"गयो वालक् कालको वय पनि उसै वाल रसले ।
उसै रितूले यौवन् पनि विति गयो मोह्-वशले ॥
भयो वृद्धावस्था अझ पनि भजींदैन मनले ॥
कसो गर्नन् स्वामित्! मकन यमका दूतहरूले ॥"—अस्तु ।

भावको चमत्कारिता उत्कृष्ट साहित्यको विशिष्टता मानिने भएकोले यौटै विषय वस्तु पनि काव्यात्मक प्रतिभाका सामु विविध-रूपमा देखा पर्दछ । यसरी भानुले आफ्नु अनुपम अनुवाद कृति रामायणमा अरू रामायणकारहरूले साहित्यिक चातुर्यको प्रदर्शनमा लम्याएका गहकिला भाव-पक्षलाई पनि सरस र सरल शैलीमा कवित्वका मार्मिक रीतिले थोरै शब्द भित्र छर्लङ्ग्याएका छन् । यसै तथ्यले यिनका कृतिहरूमा मौलिकता भरिएको पाइन्छ ।

शृङ्खलित समाजको रूप-रेखा र सात्त्विक निष्ठाको जीवन-तत्त्व उजिलयाउने सबै भुक्त-भुक्त प्रवृत्तिमा मर्यादापुरुषोत्तम रामका चरित्रको श्रेय सर्वोपरि रहेको कुरा प्रागैतिहासिक काल देखि आज सम्मका राम-काव्य परम्पराको प्रवाहमा रसाइ आएकै देखिन्छ । चाहे त्यो कुनै वर्गको प्राणी होस्—त्यसमा ईश्वर-गुरु-माता-पिताहरू प्रति आस्था-श्रद्धा र भक्ति, बन्धु-वर्ग प्रति प्रेम र प्रणय, बाल-बालिका प्रति स्नेह तथा वात्सल्यहरूको प्रवृत्ति स्वभावतः रहेके हुन्छ । देश-स्थितिले वेश-भूषा र चालचलनमा फरक देखा परे पनि सामाजिक मान्यताको अन्तर्निहित लक्ष्यमा फरक देखा पर्दैन ।

बिषय र प्रसङ्गको द्वन्द्वात्मक पृष्ठभूमिमा उब्जिएका तीक्ष्ण अनुभूतिले पोषित मौलिक भावमा सूक्तिको सरस स्रोत अँगालेर हाम्रा एकताका प्रतीक श्रद्धेय आदि कवि भानुले जीवन दर्शन सँगाल्न हामी सबैलाई घच्घच्याएका छन् ।

—जनकपुरधाम (धनुषा)

सम्पादकीय—

# विशेषांक, एक स्थितिः—

संसारमा प्रत्येक राष्ट्रको अरू अत्यावश्यक तत्व जस्तो सीमा, जाति, धर्म आदिकै आ-आफ्नो स्वतन्त्र भाषा हुन्छन् जो त्यस देशको संस्कृति, साहित्य र जातीय चेतनाको प्रमुख परिचायक हो। त्यसको अभावमा सार्वभौमिक तत्वको प्रमुख अंशनै खण्डित भए झैं हुन जान्छ।

हुन त नेपालको गुरुता र स्वतन्त्रता हिमालय झैं नै उच्चता राख्दछ तर समय-समयमा बाहिरका हुरीले ल्यायेको कसिंगर घर भित्र पनि लेसिइन्छ भने झैं त्यस समयका विभिन्न राजनीतिक घोप्टा-घोप्टीले कतिपय राजनीतिक कसिंगर हाम्रो नेपालमा पनि ओइरियो, जसले यसको गुरुता र स्वतन्त्रताको मौलिक स्वरूप स्वतः धमिलो भएर गयो। अन्यथा भाषा र मानव सभ्यताको भँडार हिमालयको काखमा बसेर हामी आफ्नो भाषा र यसले एक रूपता अंगालेको विगत डेढ सय-वर्ष मनी गनाउने लज्जित स्थितिमा छौं भने हाम्रो साहित्यको ढुकुटी कस्तो होला!

जे होस्, आजको समाज गएका ती पीँढीलाई दोष थोपरेर मात्र न्याय लिन सक्दैन, जति भोलि आउनेहरू प्रति उत्तरदायी हुनु छ। तसर्थ गर्नु छ अवश्य केही, त्यो पनि आ-आफ्नो पसीनाको बलमा र हिजोको कष्टलाई एउटा प्रेरणा संझेर! किन कि ती महान आत्मा, जसले आफू मरिमेटेर आजको समाजका लागि केही संगालो गरि दिए। अब त्यसको सेहार-सुसार गरेर स्वस्थ बनाउनु हाम्रो कर्तव्य हुन गएको छ।

युगको प्रभावबाट समाज पर बस्न सक्दैन। आज जुन राष्ट्रिय गौरवशाली साहित्य र भाषाको उत्तरोत्तर बिकास भै रहेछ, त्यो निःसन्देह अभिमान गर्ने योग्य छ र यस पथमा दार्जिलिङ्गका प्रवासी बन्धुहरूको सेवा सदैव प्रेरणावर्धक हुन गएको अविस्मरणीय छ!

यसै प्रभावबाट प्रेरित भएर आदि कवि भानुभक्तको १५८ औं एक सय अन्ठाउन्नौं जन्म जयन्ती समारोह मनाउन जनकपुर कला परिषद्को आह्वानमा गठित समितिले जनकपुर जस्तो ठाउँमा राष्ट्रभाषा र साहित्यको यो असम्भार पहाड़ धान्न पत्र-पुष्पको रूपमा पनि भानुविशेषांक प्रस्तुत गरी आदिकविको तिर्नै न सकने चिरकालीन विशिष्ट ऋणको सक्दो ब्याज सम्म तिर्ने र भानु-स्मारक स्थापित गर्ने निधो गऱ्यो।

साँच्चै भनौं भने हामीमा यो दरिलोपन, त्यो पनि यहाँको जलवायुमा कहाँबाट आउन सक्दथ्यो, तर हामीले आफ्नै बलमा यो ता...ती गर्ने भूल गरे झैं देखिन्छ। वस्तुतः यसको लागि अरू आदरणीय साहित्य-सेवीहरूको टेवा लिन बिजौना न गरेका पनि होइनौं, तर हामीलाई भाग्यले साथ दियेन भन्नु पर्छ। जे होस्,

हामी लडखडाउँदै 'द्वैमासिक' पत्रिका सारङ्गी संग हातेमालो गरेर यहाँ सम्म पुग्यौं र विशेषांक संज्ञा दिन सक्यौं। हुनत विशेषांकको मर्यादाको लागि भानुभक्तका व्यक्तित्व र कृतिहरूका विभिन्न पक्षको विश्लेषणात्मक विवेचना हुन पर्ने थियो र अठोट पनि त्यही गरेका थियौं तर अकस्मात् अनावृष्टिले वनमा पहेंलिएका पालुवा झैं भयौं। तै पनि आफूसंग भएका सामग्री र आ-आफ्नै क्षमताका आधारमा आफूलाई सुकन न दिई केही कोपिला प्रस्तुत गर्ने चेष्टा गरेका छौं। अब यसको हुर्कने फुलने र फलने कुरा यसको प्रारम्भिक स्थिति साथि अलिकति पनि सहानुभूति देखाई प्रेमले सुमसुम्याई दिने सबैको स्वस्थ धारणामा निर्भर गर्दछ।

साहित्यकार आफ्नो समयको प्रतिनिधि हुनाका साथै तिनको साहित्यमा समकालीन समाज र देशको आत्मा बोलेको हुन्छ। तसर्थ कैल्हे काहीं, कहीं कहीं उसको बोलाई र साहित्य सिर्जनामा औचित्य औ अनौचित्यको भेद औंल्याउनु पनि अनिवार्य झैं नै प्रतीत हुन्छ। तर श्रद्धेय भानुभक्त नेपाली भाषा साहित्यका आदित्य स्वरूप र धर्म तथा सामाजिक अभ्युत्थानका प्रणेता भएकाले उनका कृतिमा आध्यात्मिक आलोक, सांस्कृतिक देन एवं राजनैतिक झलक आज सयौं वर्ष पछि सम्म पनि स्तुत्य छ र भविष्यका लागि पनि यसले नेपाली आमाको गुन्यौं चोलोको झैं निर्जी मौलिक दर्शन युक्त पवित्रता र प्रतिष्ठा औचित्यरूपले राख्ने चेतना परम पिता परमेश्वरले सदैव सबैमा दिउन् यही हाम्रो प्रार्थना छ।

यो विशेषांक कुनै परियोजनात्मक सिर्जनाको स्वरूप होइन। यस्तो साहित्य कलाको सिर्जनाका लागि को, कहाँ कति सजग र दूरदर्शी छन् भन्ने कुरा प्रष्ट्याउन हाम्रो कलमको आवश्यकता छैन। किन भने कला र परिस्थितिले कुनै पनि राष्ट्रवादी लाई औंल्याउन सक्दछ। तसर्थ यो त खालि एउटा स्थितिको परिणाम मात्र हो। तथापि हामीलाई अगाध हर्ष छ कि उत्तरदायी समूहको उदासीनता र अरूको थिचोमिचो समेत वढ्दा कतैको दृष्टिजन्य वाहखरीकै रूपमा भये पनि केही कोरेर समस्त अञ्चलवासीको तर्फबाट श्रद्धाञ्जलि अर्पण गर्न सक्यौं।

यसो गर्दा हामीले आफ्नो साहित्यिक प्रौढ़हरूको मान्यताहरूलाई यसको सिर्जनाको गोरेटोमा प्रकाशमय आधार सानो यथाशक्य आदर गर्न चुकेका छैनौं झैं नै विश्वास छ। तर केही प्रसंग बाहिरका र काँचा विषय समावेश हुन गयेकामा सारङ्गीको माध्यमद्वारा यस्को अंगीकरण हुनु नै यसले आफ्नो पूर्ण स्वतन्त्र रूप लिन न सकेको स्थिति स्वतः प्रष्टिन्छ र विशेषांक सम्पादक मण्डल क्षमाको अभिलाषी छ।

अन्तमा हामी यस पुनीत कार्यमा साझा रूपले हैंसेमा होस्टे गरी उत्साह वर्धक सहयोग दिनु भएकोमा अञ्चलाधीशज्यूको उदार राष्ट्रवादी प्रवृत्तिको यहाँ उल्लेख न गरी रहन सक्दैनौं र साथै ती विद्वान् लेखक तथा कवि प्रति पनि हृदयले कृतज्ञता प्रकट गर्दछौं, जस्को सद्भावना र सहयोगले यो कार्य सम्पन्न हुन सक्यो।

# प्रकाशकीयः—

हाम्रो प्रकाशन योजना 'सारङ्गी' को अङ्क-५ चौं आजभन्दा धेरै अघि पाठकहरूका समक्ष प्रस्तुत हुनु पर्ने हो, तर २०२८ साल असाढ २९ गते भानु-जयन्ती पर्ने भएकोले एक भानुजयन्ती समितिको पनि गठन गरेका थियौं। यसै क्रममा 'भानुविशेषाङ्क' निकाल्न र भानु-स्मारक बनाउन पनि प्रस्ताव भएको थियो। त्यसै अनुरूप सारङ्गीलाई भानुविशेषाङ्कको रूपमा आकर्षक तथा सफल पार्नका लागि हामीले एक संपादक मण्डल र सहयोगी समुदायको पनि गठन गर्‍यौं।

यस अङ्क ५ लाई भानुविशेषाङ्कको रूपमा देशका प्रख्यात लेखकहरूको उत्कृष्ट रचना संकलनगरी सुरुचिपूर्ण उत्तम पाठ्य-वस्तु तुल्याई पाठकहरूका समक्ष उपलब्ध गराउने हाम्रो प्रयास थियो। अतः हामीले वाहिरका लेखकहरूको पनि सहयोगको आशा राखेका थियौं र प्रतीक्षामै कैयौं दिन वीते, तर दुर्भाग्यवश सो आशा पूर्ण हुन सकेन र "भानुभक्तको रामायण र वंगाली रामायणको तुलनात्मक विश्लेषण" तथा "के भानुभक्त आदि कविहुन् ?" यी दुइ विषयका लेख यसमा राख्ने मौका पाएनौं। अनि अवकाश न पाउनु भएरै होला, संपादक मण्डलकै एक जना सदस्यज्यूवाट यस अङ्कमा वहाँलाई निर्धारित "भानुभक्तको कृति र व्यक्तित्व" विषयक लेख पनि पाइएन। यी सवै कुरावाट यस अङ्कको विशेषतामा कमी न आए पनि यसरी प्रतीक्षा गर्नु पर्दा र आर्थिक कठिनाइवाट पनि अङ्क ५ लाई समयमा प्रकाशित गर्न न सकी धेरै ढिलो हुन गएकोले अङ्क५-६ एक साथै संयुक्त गरी विशेषाङ्कको रूपमा पाठकहरूका समक्ष प्रस्तुत गर्नु पर्‍यो।

सारङ्गीको यस मार्कालाई हाम्रो संपादक मण्डलका सदस्यज्यूहरूले व्यक्ति-दिनु भई सक्रियतासाथ विषय वस्तुहरूको वहाँहरूवाट गौरवपूर्ण पूर्ति हुन गएको छ, त्यस्कालागि सारङ्गी परिवार सहित कलापरिषद् परिवार वहाँहरू प्रति धेरै धेरै आभारी छ।

वीचको यस लामो अवधिसंम पाठकहरूले जुन धैर्य धारण गरी सारङ्गीको प्रतीक्षा गर्दै हामीलाई सहयोग दिनुभएको छ, त्यस प्रति धन्यवाद ज्ञापन गर्दै प्रयासको

वावजूद पनि उपर्युक्त कारण जन्य ढिलो भएमा पाठक वर्गलाई पर्न गएको कष्टकालागि हामी क्षमा माग्दछौं ।

र, अबदेखि सदैव समयमा नै स्वस्थ र उत्कृष्ट पाठ्य वस्तुले सुसज्जित सारङ्गी पाठकहरूका समक्ष राख्ने प्रयास हाम्रो रहने छ ।

कलापरिषद् द्वारा आयोजित भानुजयन्ती समारोहलाई सफल पार्न जुन-जुन संस्थाका महानुभावहरूले आर्थिक मानसिक र शारीरिक सहयोग दिनुभएको थियो, वहाँहरू प्रति कलापरिषद् परिवार हार्दिक धन्यवाद ज्ञापन गर्दछ ।

साथै यता कतिपय व्यक्तिइरूले सारङ्गी र कलापरिषद्लाई देशको राजनीतिक चालवाजीसंग मुछी वदनाम गर्ने किसीमवाट भ्रामक र अस्वस्थ आलोचना गर्न थालेका छन् । कुनै व्यक्ति राजनीतिसंग संलग्न थियो भन्दैमा उसको आस्तित्व नै हराउने र उसको मनमा संस्कृति प्रति श्रद्धा नै मर्नै हुँदैन । प्रत्येक व्यक्तिको राजनीतिका साथ-साथ सामाजिक महत्व भिन्दा भिन्दै हुन्छ । अतः समाज र संस्कृति प्रति श्रद्धा राख्ने कुनै पनि व्यक्ति चाहे त्यो राजनितिक होस, व्यवसायी पत्रकार वा कुनै श्रमजीवी नै होस यदि श्रद्धापूर्वक कलापरिषद्लाई सहयोग गर्न चाहन्छ भने कलापरिषद् सधैं त्यसको हार्दिक स्वागत गर्दछ । कसैले व्यक्तिगत रीसले गरेको अस्वस्थ आलोचना बुद्धिमान् पाठकहरूको तीक्ष्ण दृष्टिवाट लुकने छैन । अतः यसवाट कलापरिषद्लाई कुनै किसिमको हानि पुग्ने संभावना पनि हुने छैन । स्वस्थ र निष्पक्ष आलोचनाको स्वागत गर्दै आफूमा रहेको त्रुटि परिमार्जन गर्न कलापरिषद् सधैं तयार छ । अतः हामी आफ्नो आलोचकहरूलाई पनि आफ्नू दूषित मनोवृति त्यागी स्वस्थ रूपमा सही आलोचना गरी हामीलाई सहयोग गर्न प्रार्थना गर्दछौं ।

मुद्रण र कतिपय कठिनाइले गर्दा अबेर भएता पनि 'सारङ्गी' को भानु-विशेषाङ्करूप (५, ६ अंक) पाठकहरूको हातमा छ र सामान्य अंकको भन्दा यसमा भएका सर्वाङ्गपूर्ण वढी पृष्ठ र अंचलका विशिष्ट विद्वान् र लेखकहरूवाट लिखित भानु संवन्धी गहकिला लेखवाट पाठकहरूलाई अवश्य पनि आनन्द दिने छ । समय मै उपलब्ध गराउन नसकेकोमा आफ्नू असफलताको निमित्त पुनः पनि क्षमा याचना गर्दै हामी पाठक वृन्दवाट सदैव सहयोग र सहानुभूतिको अपेक्षा गर्दछौं । ...इति

# भानु प्रकाश का मरीचिहरू :-


(१) मोती राम भट्ट कृत कवि भानुभक्ताचार्यको जीवन-चरित्र। नेपाली साहित्य सम्मेलन १९६४ संस्करण।

(२) भानुभक्त—सूर्यविक्रम ज्ञवाली भानुभक्त स्मारक ग्रन्थ। ने० सा० स० दार्जिलिङ्ग।

(३) नेपाली काव्य र उसका प्रतिनिधि कवि-हृदय चन्द्र सिंह प्रधान।

(४) नेपाली साहित्यको इतिहासमा सर्वश्रेष्ठ पुरुष—लक्ष्मी निबन्ध संग्रह।

(५) आदिकवि कवि सम्राट् भानुभक्ताचार्यको सच्चा जीवन-चरित्र-कविराज पं० नरनाथ शर्मा आचार्य,

(६) पुरानो कवि र कविता—वाबु राम आचार्य,

(७) भानुभक्त—वालचन्द्र शर्मा, ने० सा० स० (२०१४)

(८) भानुभक्तको महत्व सूर्य विक्रम ज्ञवाली, दियालो वर्ष ९

(९) भानुभक्त र उनको युग—वालचन्द्र शर्मा, साझा समालोचना

(१०) आदिकवि भानुभक्त आचार्य - भाइचन्द्र प्रधान (१९५२)

(११) कवि भानुभक्ताचार्य-मृगेन्द्र शम्शेर-भानुभक्त स्मारक ग्रन्थ (१९९७)

(१२) भानुभक्त एक समीक्षा—हृदयचन्द्र सिंह प्रधान (२०१३)

(१३) भानुभक्त—ईश्वर वराल, भारती वर्ष १

(१४) भानुका उपाधि—कमल दीक्षित, जगदम्वा प्रकाशन २०१७

(१५) भानुभक्तको शैली—वालकृष्ण सम, भानुभक्त स्मारक ग्रन्थ।

(१६) पाँच शय वर्ष—वालकृष्ण पोखरेल।

(१७) भानुभक्तको रामायण भूमिका-सूर्य विक्रम ज्ञवाली ने० सा० स० दार्जिलिङ्ग।

(१८) नेपाली जातित्वको विकासमा भानुभक्तको स्थान—सूर्य विक्रम ज्ञवाली। भानुभक्त स्मारक ग्रन्थ।

(१९) भानुभक्त कवि तथा पद्यानुवादक—पुष्कर शम्शेर, भानुभक्त स्मारक ग्रन्थ।

सारङ्गी (Sarangi) श्रावण भाद्र, आश्विन-कार्तिक, २०२८ ज. प्र. का. द. नं.
०२७१०२८-१०

# विजया दशमीको शुभ-उपलक्षमा

समस्त नेपाली

को

सुख, शान्ती र समृद्धिको

कामना गर्दै

औद्योगिक करणको दिशामा अझ द्रुत गतिले

प्रगति होस भन्ने

शुभ-कामना ज्ञापन गर्दछौं

—जनकपुर चुरोट कारखाना (प्रा०) लि०
परिवार

मुद्रक :—हिमाली छापाखाना, जनकपुरधाम।